१-९: सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूको ७७ औं अवतरण दिवस तथा सिद्धाश्रम शक्ति केन्द्रको ११ औं वार्षिकोत्सवका केही झलकहरु । (विस्तृत समाचार र अन्य तस्वीरहरु पृष्ठ ४८ मा)

॥ ॐ ह्रीं क्ष्यां क्षं गुरु गोरखनाथाय नमः ॥
॥ ॐ परम तत्वाय निखिलेश्वराय गुरुभ्यो नमः ॥

# गोरक्ष निखिल वाणी

● वर्ष ११ ● अङ्क १० ● ज्येष्ठ २०६७ ● पूर्णाङ्क १३०

## सम्पर्क कार्यालयहरू

● **चितवन**, भ.न.पा- २, क्षेत्रपुर फोन: ०५६-५२१३८५
● **गोरखा**, सौरपानी–३ पोखरी, फोन: ९७४६०१८८७८, ९७४११२७७४५
● **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट, फोन: ०६१-५३०७८६
● **सर्लाही**, बरहथवा-७, एस्माली टोल, फोन: ०४६-५४००११
● **पाल्पा**, तानसेन, फोन: ९८४७०-२८१८८
● **ललितपुर**, लगनखेल, फोन:२२२००२१
● **गोरखा**, बसपार्क, फोन: ०६४-४२०३४८
● **तनहुँ**, दमौली, व्यास गुफा, फोन: ०६५-५६१६६२
● **लमजुङ**, बैँसीशहर, भीमसेनटोल
● **भक्तपुर**, कटुन्जे-१, फोन: ०१-६२१३४५५
● **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि फोन: ०१-६२२५१७२
● **कास्की**, लेखनाथ चोक, फोन: ०६१-२२९१९०
● **सिन्धुली**, रातमाटा फोन: ९८४४०४०८९९
● **स्याङ्जा**, स्याङ्जाबजार फोन: ९८४६०-४४३५४
● **चितवन**, गौरीगञ्ज
● **सिन्धुपाल्चोक**, बाह्रबिसे फोन: ०१-६९१६५९३
● **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी
● **काठमाडौँ**, पुरानोबानेश्वर, फोन: ०१-२१०११२६
● **काठमाडौँ**, सिमलटार
● **काठमाडौँ**, तीनकुने (मुनि भैरव)
● **ललितपुर**, गोदावरी

पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**
गोरख विशेष
मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

## जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, काठमाडौँमा रहेको छ। परमपूज्य सद्‌गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो। आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ। यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ। यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन्। यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ। त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्‌गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन्। त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो। प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ। विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ। यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ। साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ। साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ।

## आश्रमका नियमित कार्यक्रमहरू

प्रत्येक साँझ ५ बजे गुरु आरती। प्रत्येक बृहस्पतिबार बिहान १० बजे गुरु पूजन। प्रत्येक अंग्रेजी महिनाको २१ तारीख दिव्य गुरु महोत्सव कार्यक्रम। प्रत्येक महिनाको पहिलो सोमबार पशुपति मृगस्थलीस्थित श्री श्री महायोगी गुरु गोरखनाथको मन्दिर प्रांगणमा श्री शिव गोरक्ष हवन, पहिलो मंगलबार लगनखेलस्थित वटुक भैरव मन्दिर प्रांगणमा तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधबार लगनखेलस्थित महालक्ष्मी मन्दिर प्रांगणमा तान्त्रोक्त महालक्ष्मी हवन तथा पहिलो बिहीबार पाटन कुम्भेश्वरस्थित वगलामुखी मन्दिर प्रांगणमा तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम सञ्चालन। विभिन्न चाडपर्वहरूमा विशेष कार्यक्रम। गोरक्ष निखिल वाणी आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिकको प्रकाशन। विभिन्न एफ.एम. स्टेशनहरूमार्फत् गोरक्ष निखिल सन्देश रेडियो कार्यक्रम सञ्चालन। समाजमा आध्यात्मिक शिक्षा लागू गराउनका लागि गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको सञ्चालन। तान्त्रिक ध्यानका विभिन्न चरणका कक्षाहरू। समय समयमा विशेष साधना कार्यक्रमहरू। प्राणप्रतिष्ठित तान्त्रिक सामग्रीहरूको वितरण। समस्या समाधानका लागि परामर्श सेवा। असाध्य रोगका लागि तान्त्रिक हिलिङको व्यवस्था।

**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग
ssk.org.np, info@ssk.org.np

**मुद्रण**
**भेराइटी प्रिन्टर्स प्रा.लि.**
कुलेश्वर, काठमाडौं।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, काठमाडौं, नेपाल**
**फोन नं:** ०१-४३८९१५४, **पत्रिका वितरण फोन नं:** ०१-६२२५१७७ (CDMA Phone), URL: gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा

सर्वप्रथम त 'गोरख प्रकट दिवस' एवं सातौं रोट महोत्सवको यस पुनीत अवसरमा समस्त भक्तजनमा हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं। यस महिनामा सिद्धाश्रम शक्ति केन्द्रको लागि एवं पृथ्वीवासीहरुकै लागि सुखी र गर्वको दिव्य दिन "वैशाखी पूर्णिमा" परेको छ जुन दिन गुरु गोरखनाथ यस धर्तीमा प्रकट हुनुभएको थियो। उहाँको यस प्रकटसँगै पृथ्वीवासीहरुले गुरुरुपमा गुरु गोरखनाथलाई प्राप्त गरेका थिए। गुरु गोरखनाथ प्रकट हुनुभएको यस चण्डी पूर्णिमा अर्थात् "वैशाखी पूर्णिमा"लाई यस केन्द्रले "गोरक्ष प्रकट दिवस"को रुपमा मनाउँदै आइरहेको छ। यसै दिनबाट यस केन्द्रले विगत ६ वर्षदेखि ११ दिनसम्म सवा लाख रोट अर्पण गर्दै आइरहेको छ।

गुरु गोरखनाथलाई खुशी बनाउने साथै उहाँको कृपा आशीर्वाद प्राप्त गर्ने एक दिव्यतम माध्यमको रुपमा रोट अर्पण कार्यक्रम रहँदै आइरहेको छ। यस कार्यक्रमको मुख्य उद्देश्य, लक्ष्य भनेकै गुरु गोरखनाथलाई खुशी बनाउनु हो, उहाँको खुशीभित्र नै समस्त जीव, जगत्‌को कल्याण छिपेको छ। यसैले यस्तो दिव्य कार्यक्रम संस्थागत रुपमा सिद्धाश्रम शक्ति केन्द्रले पहिलोपटक शुरुआत गरी सम्पूर्ण भक्तजनको सहभागितामा सम्पन्न गराउँदै आइरहेको छ। त्यसैले विगतका वर्षहरुमा यहाँहरु छुट्नुभएको भए अवश्य पनि यसपटक जसरी हुन्छ आएर रोट महोत्सव कार्यक्रममा भाग लिई गुरु गोरखनाथको कृपा आशीर्वादसहित 'रोट' प्रसादको रुपमा ग्रहण गर्नको लागि हार्दिक आमन्त्रण गर्दछौं।

यसपालिको अंकलाई हामीले 'गोरख विशेष'को रुपमा निकालेका छौं। गुरु गोरखनाथको बारेमा धेरै व्यक्तिहरु अनभिज्ञ हुनुहुन्छ। गुरु गोरखनाथको उच्चता, दिव्यता, महिमा, गरिमाको बारेमा शोध, खोज, अनुसन्धान हुनु अति आवश्यक छ। उहाँलाई योगीहरुका महायोगी, नाथहरुका महानाथ, समस्त मानव, देव, ऋषिमुनि, योगी, स्वामी, यति, नाथ आदिका परम आराध्यदेवको रुपमा, सद्‌गुरुको रुपमा आदर सम्मान प्रकट गर्ने गरिन्छ। उहाँलाई शिवको सर्वाधिक महत्त्वपूर्ण स्वरुप 'शिव गोरक्ष'को रुपमा सर्वत्र पूजन गरिन्छ। यस्ता दिव्यतम महायोगी, महापुरुषको शब्द चर्चा हाम्रो वशभन्दा धेरै पर छ। चारै युगमा उहाँको महिमा गाइएको छ, उहाँको दिव्यता, उच्चताको व्याख्या गरिएको छ।

उहाँको यस दिव्यतम प्रकटको पावनतम अवसर पारेर यस अंकमा उहाँसम्बन्धी केही अंशरुपमा चर्चा गर्न खोजिएको छ। उहाँको विराटताको चर्चा असम्भव छ, केही जानकारीहेतु मात्र हामीले कोशिश गरेका छौं।

अन्तमा यस अंकको प्रकाशनको क्रममा भए गरेका समस्त गल्ती कमी कमजोरीको लागि परमपूज्य सद्‌गुरुदेवहरु र यहाँहरुसमक्ष पनि क्षमा माग्दै आवश्यक सल्लाह सुझावको अपेक्षा राख्दछौं।

अस्तु!

परमपूज्य सदगुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

परमपूज्य सदगुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ

मानव जीवनमा गुरुको सर्वथा उच्च स्थान मानिन्छ। गुरु प्राप्तिबिना मानव जीवन व्यर्थ छ। सम्पूर्ण शास्त्रको सम्यक् ज्ञान भए पनि, धन सम्पत्ति र रूप लावण्यले भरिपूर्ण भए पनि, समस्त प्रकारका सिद्धि, शक्ति र ऐश्वर्यले भरिपूर्ण भए पनि यदि गुरु प्राप्त भएको छैन भने मानिस अपूर्ण नै हुन्छ किनकि गुरुले नै संसार सागरबाट तारेर हामीलाई मोक्षको भागीदार बनाउनुहुन्छ, हामीलाई असीम आनन्दबाट तृप्त गरेर पूर्ण गरिदिनुहुन्छ। यसप्रकार पूर्णता, मुक्ति अनि अनगिन्ती सिद्धि र शक्ति प्रदान गर्नुहुने दुई सद्गुरुदेवहरूलाई सिद्धाश्रम शक्ति केन्द्रले धारण गरिरहेको छ। गुरुहरूको महिमा, गरिमा र परिचय कसले पो दिन सक्छ र ? तैपनि सामान्य जानकारीसम्मका लागि महान् गुरुहरूको संक्षिप्त परिचय दिएका छौँ–

## परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

*वन्दे नारायणं देवं सद्गुरुं निखिलेश्वरं।*
*ज्ञानामृतरसेनैव पूतं येनाखिलं जगत् ॥*

यस विश्व ब्रह्माण्डलाई भौतिक एवं आध्यात्मिकरूपले सन्तुलित राख्न प्रकृतिद्वारा निर्मित अद्वितीय तपस्थली नै सिद्धाश्रम हो। मानव जीवनको अन्तिम ध्येय यस सिद्धाश्रमका प्राणाधार परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज हुनुहुन्छ। आफ्ना गुरु स्वामी सच्चिदानन्दज्यूको आदेश शिरोपर गरी 'धर्मसंस्थापनार्थाय...'को शंखघोष गर्दै उहाँ सन् १९३३ अप्रिल २१ तारीखमा भारतस्थित राजस्थान प्रान्तको जोधपुरमा अवतरित हुनुभयो। वेदाध्ययनबाट शिक्षा शुरु गर्नुभएका उहाँको विवाह बाह्र वर्षको उमेरमा भगवती देवीसँग भयो। आफ्नो जीवन परिवारको लागि मात्र नभएर सम्पूर्ण समाजको लागि हो भन्दै विवाहपश्चात् उहाँले थुप्रै वर्ष हिमालयका गुफा, विकट कन्दरा र जंगलहरूमा संन्यास जीवन बिताउनुभयो। त्यसबेला उहाँले विभिन्न स्वामी, संन्यासी, योगी, तान्त्रिक, मान्त्रिक, आयुर्वेदाचार्यहरूसँग भेटेर विभिन्न विधामा आफूलाई निष्णात् बनाउनुभएको थियो। संन्यास जीवनपश्चात् पुन: गृहस्थमा फर्केर आफूले प्राप्त गरेको आध्यात्मिक ज्ञानलाई समाजमा फैलाउने कार्य गर्नुभयो। यसको लागि सयौँ पुस्तकहरूको रचना गर्दै असंख्य शिविर सञ्चालन गरी साधना, प्रवचन र दीक्षाको माध्यमबाट शिष्य निर्माण प्रक्रियालाई जोड दिनुभयो। यसरी ज्योतिष, सामुद्रिक शास्त्रका सुविज्ञ ज्ञाता, तन्त्र-मन्त्रका अन्तिम नाम, आधुनिक धन्वन्तरि, सम्मोहन विज्ञानका मसीहा, कुण्डलिनी शक्तिका सहज व्याख्याकार, सूर्य विज्ञानका अपूर्व ज्ञानी, धुरन्धर रत्न चिकित्सक आदिका रूपमा उहाँ **डा. नारायणदत्त श्रीमाली**को नामबाट विश्वमा विख्यात् हुँदै महामहोपाध्याय, मन्त्र शिरोमणि, समाज शिरोमणि, जगद्गुरु आदिको संज्ञाले विभूषित हुनुभयो। आगामी गोरक्ष निखिल युग निर्माणको महायोजना आफ्ना शिष्यहरूको काँधमा सुम्पेर सन् १९९८ जुलाई ३ मा महाप्रयाण लिई उहाँ आफ्नो मूल स्थान सिद्धाश्रम फर्कनुभयो। हाल सद्गुरुदेवकै सूक्ष्म आदेश निर्देशनबमोजिम सिद्धाश्रम शक्ति केन्द्र यस महान् योजनामा कटिबद्ध छ।

## श्री श्री महायोगी गुरु गोरखनाथ

*अनन्त कोटि ब्रह्माण्ड गोरक्ष स चराचरम्।*
*दर्शनम् मुक्ति लाभं च तस्मै श्री गोरक्ष नमः ॥*

श्री श्री महायोगी गुरु गोरखनाथ सम्पूर्ण गुरुहरूमा महागुरु, सम्पूर्ण योगीहरूमा महायोगी, सम्पूर्ण नाथहरूमा महानाथ हुनुहुन्छ। महायोगी श्री श्री गुरु गोरखनाथ भगवान् शिवका सबैभन्दा महत्त्वपूर्ण र प्रमुख अवतारको रूपमा पूजित हुनुहुन्छ। योग मार्गको प्रचारको लागि भगवान् शिवले नै गोरक्ष रूप धारण गर्नुभएको हो। यसैले उहाँलाई श्री शिव गोरक्षको रूपमा आदर-सम्मान गर्ने गरिन्छ। गो शब्दको अर्थभित्र समाहित गाई, पृथ्वी, इन्द्रिय, आदि सम्पूर्णको रक्षा गर्ने गोरक्ष नै हुनुहुन्छ। श्रीमद्भागवत, नारदपुराण, स्कन्दपुराण, ब्रह्माण्डपुराण, शिवपुराण, शाक्तप्रमोद, गोरक्षगीता आदिमा उहाँको बारेमा उल्लेख भएको छ। विश्वको इतिहासलाई हेर्दा उहाँको प्राकट्य सयौँ हजारौँ वर्षको अन्तरालमा विभिन्न स्थानमा भएको पाइन्छ। यसबारे विभिन्न विद्वान्हरूले थुप्रै अनुसन्धान गरेका छन्। आमाको कोखबाट नभई आवश्यकता अनुसार आफै प्रकट हुनुहुने महायोगी अजर अमर कायायुक्त हुनुभएको कुरा स्पष्ट हुन्छ।

नेपालको सन्दर्भमा हेर्दा गोरखा राज्यको नामाकरण उहाँको नामबाट भएको पाइन्छ भने उहाँकै आशीर्वादबाट यो राष्ट्र कहिल्यै पराधीन बन्नु नपरेको गौरवशाली इतिहास रहेको छ। उहाँको ऋण चुकाउन पनि हामीले उहाँको भक्ति गर्नैपर्दछ। नाथपंथका अग्रज महानाथ गुरु गोरखनाथ नेपालका राष्ट्रगुरु हुनुहुन्छ। नेपालमा विभिन्न ठाउँमा उहाँका मठ-मन्दिरहरू छन् जस्तै गोरखाको गोरख गुफा, पशुपतिको मृगस्थली पीठ, हनुमानढोकाको काष्ठमण्डप आदि। सिद्धाश्रम शक्ति केन्द्रको अनुसन्धानअनुसार गुरु गोरखनाथ सर्वप्रथम यस धरतीमा वैशाख शुक्ल पूर्णिमाको दिन गोरखाको गोरख गुफामा प्रकट हुनुभएको थियो। नेपालमा मात्र नभएर विश्वभर उहाँको सम्प्रदाय, मन्दिर एवं मठहरू स्थापित छन्। आगामी गोरक्ष निखिल युग निर्माणको लागि गोरक्ष शक्ति जगाउँदै नाथ परम्परालाई समाजमा स्थापित गर्न सिद्धाश्रम शक्ति केन्द्र गतिशील छ।

# सिद्धाश्रम शक्ति केन्द्र

## (आध्यात्मिक शक्ति अनुसन्धान संस्था)

सिद्धाश्रम शक्ति केन्द्र, आध्यात्मिक शक्ति अनुसन्धान संस्थाको स्थापना ०५६ वैशाख ८ गते भए पनि यसको विधिवत् दर्ता भने ०५६ वैशाख २३ गते मात्र भयो । परमपूज्य सद्गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई गुरुरूपमा धारण गर्दै यो संस्था शुरुमा केही वर्ष काठमाडौँको कमलादीबाट सञ्चालन भयो । त्यसपछि बत्तीसपुतली, पुरानो बानेश्वर हुँदै संचालन भएको यस संस्थाको केन्द्रीय कार्यालय हाल बसुन्धरामा रहेको छ ।

समस्त भूमण्डललाई गोरक्ष निखिल ऊर्जाले आपूरित गर्दै गोरक्ष निखिल युग स्थापनार्थ अघि बढिरहेको यस संस्थाले विभिन्न आध्यात्मिक गतिविधिहरूलाई अघि बढाइरहेको छ । मुलुकभर विभिन्न सम्पर्क कार्यालयहरूमार्फत आफ्ना गतिविधिहरू अघि बढाइरहेको यस संस्थाले विभिन्न ठाउँमा स-साना एकाइहरूको गठन गरेर पनि समाजमा आध्यात्मिक गतिविधिलाई अघि बढाइरहेको छ । संस्थाका विभिन्न सम्पर्क कार्यालयहरूमा बिहीबारको गुरु पूजन, दिव्य गुरु महोत्सव, विभिन्न चाडपर्वमा पूजनादि कार्यक्रमहरू सम्पन्न भइरहेका छन् भने विदेशमा रहेका यससँग सम्बन्धित एकाइहरूले पनि आध्यात्मिक गतिविधिमार्फत विश्वमा आध्यात्मिक शीतलता छरिरहेका छन् ।

संस्थाले प्रत्येक महिना काठमाडौं उपत्यकालगायत अन्य स्थानहरूमा रहेका विभिन्न शक्तिपीठ र मन्दिरहरूमा तान्त्रोक्त हवनहरू सञ्चालन गर्दै आइरहेको छ भने प्रत्येक वर्ष यस संस्थाले गोरखास्थित गोरख गुफामा श्री श्री महायोगी गुरु गोरखनाथको चरणकमलमा सवालाख रोट चढाउँदै आइरहेको छ । यसका अतिरिक्त कैयौं मन्त्र हवन साधना, तान्त्रोक्त साधना, ध्यान, महोत्सव आदिका कार्यक्रमहरू सञ्चालन गरिसकेको छ भने गोरक्ष निखिल वाणी मासिकलाई निरन्तररूपमा प्रकाशित गरिरहेको छ । एकातिर आध्यात्मिक पत्रिकामार्फत संस्थाले आध्यात्मिक गतिविधिलाई समाजसामु लगिरहेको छ भने अर्कोतिर गोरक्ष निखिल सन्देश नामक साप्ताहिक रेडियो कार्यक्रमबाट पनि यसले आफ्नो अभियानलाई तीव्र बनाइरहेको छ । समाजमा योग्य, सबल, चरित्रवान् नागरिकहरूको उत्पादनका लागि शैक्षिक मिशनअन्तर्गत गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम सञ्चालन गरिरहेको यस संस्थाका विभिन्न तह र तप्कामा रहेका कार्यकर्ताहरूका लागि मासिक प्रशिक्षण तथा तालिमको पनि व्यवस्था हुँदै आएको छ ।

हाल अ.ना.प. शैली अपनाएर अगाडि बढिरहेको यो संस्थाको सांगठनिक स्वरूपअन्तर्गत सम्पर्क कार्यालयहरूको सञ्चालन भइरहेको छ भने यसै शैलीभित्र क्षेत्रीय कार्यालयहरूको पनि विकास भइरहेको छ । संस्थाको विकास र विस्तार हुने क्रममा कतिपय सम्पर्क कार्यालयका आफ्नै भवन बनिसकेका छन् भने कतिपयमा भवनका लागि जग्गाको व्यवस्था भइसकेको छ । थुप्रै सम्पर्क कार्यालयहरूमा विभिन्न स्तरका ध्यानका कार्यक्रमहरूका अतिरिक्त परामर्श सेवालगायत तान्त्रिक हिलिङ्ग पनि सञ्चालन भइरहेका छन् । यसप्रकार यो केन्द्रले आध्यात्मिक युग निर्माणको दिशामा अग्रणी भूमिका निर्वाह गरिरहेको छ ।

# आत्मिक निवेदन

*आत्मीय पाठकवर्ग,*

*'गोरक्ष निखिल वाणी' पत्रिका यहाँहरुलाई कस्तो लागिरहेको छ? अनेक बाधा, अड्चन एवं समस्याहरुका बावजुद पत्रिकालाई निरन्तरता दिँदै प्रबुद्ध पाठकहरुको कसीमा आफूलाई घोट्दै शुद्धता एवं स्तरीयतामा क्रमशः वृद्धि गर्दै जाने हाम्रो संकल्प एवं प्रयास रहँदै आएको छ। भौतिकतामा चुर्लुम्म डुबेको आजको समाजमा एउटा आध्यात्मिक पत्रिकालाई नियमितता दिनु र आफ्नो खुट्टामा उभिन सक्ने बनाउनु भनेको निश्चय पनि असम्भवजस्तो लाग्दछ। तर परमपूज्य सद्गुरुदेवहरुको आशीर्वादले यो असम्भवलाई सम्भव बनाउने कार्य तपाईंहरुबाटै भइसकेको छ। पत्रिकालाई युगौं-युगसम्म जीवन्त राखी आउँदो पुस्तालाई हाम्रो आध्यात्मिक धरोहरको रुपमा हस्तान्तरण गर्ने जिम्मेवारी पनि तपाईं, हाम्रै काँधमा आएको छ।*

*प्रत्येक व्यक्ति स्वयं आध्यात्मिक पथमा अग्रसर भई आफ्नो परिवार, टोल, छिमेक, समाज, गाउँ, सहर, जिल्ला, अञ्चल हुँदै सम्पूर्ण देश अनि सम्पूर्ण विश्वलाई नै अध्यात्ममय बनाउने महान् अभियानलाई मूर्तरुप दिन पत्रिका सबैभन्दा सशक्त माध्यम बन्न सक्छ। अतः पत्रिका सदस्यता विस्तारको कार्यक्रममा यहाँहरुको सहयोगको अपेक्षा गर्दछौं।*

*पत्रिकाको बिक्री मूल्य रू. ३०।- मात्र भएकोले तपाईंले कम्तीमा दसवटा पत्रिका मगाएर आफ्ना नाता-गोता, छरछिमेकमा बाँड्न सक्नुहुन्छ। तपाईंको घर, टोल, छिमेक वा नातागोतामा कहीं पनि पूजा-आजा, हवन, विवाह, व्रतबन्ध, सप्ताह, जन्मदिन, मेला, पर्व, महोत्सव आदि हुँदैछन् भने त्यहाँ पत्रिकाको स्टल राखेर यसको महत्त्वबारे जानकारी गराउनुका साथै वार्षिक सदस्यताको लागि प्रेरित गर्न सक्नुहुन्छ।*

*यसका अलावा टाढा-टाढा रहेका आफ्ना नाता-गोता, मित्रजनलाई हुलाकमार्फत पत्रिका पठाउन सक्नुहुन्छ। यसो गर्दा आत्मिक सम्बन्ध अझ प्रगाढ हुन जान्छ।*

*यो पत्रिका यहाँहरुको आफ्नै भएकोले यसलाई फलाउने, फुलाउने र फैलाउने जिम्मा पनि यहाँहरुकै हो। यसैले, सम्पूर्ण पाठकहरुमा हाम्रो आत्मिक निवेदन छ– आफूलगायत कम्तीमा पाँचजना वार्षिक सदस्य बनाउने संकल्प आजकै दिनदेखि गरौं।*

*यहाँहरु सबैको सहयोगले पत्रिकाको सदस्य सङ्ख्या निरन्तररुपमा वृद्धि हुँदै जानेछ जसले गर्दा पत्रिकालाई अझ स्तरीय एवं आकर्षक बनाउन मद्दत मिल्नेछ भन्ने कुरामा हामी विश्वस्त छौं।*

*वार्षिक सदस्यताको लागि रु. ३५०।- (अक्षरेपी रु. तीन सय पचास मात्र) हामीलाई पठाउनुहोस्। त्यसपछिको बाँकी काम हामी गर्नेछौं।*

*अन्तमा, आत्मीय पाठकवर्गहरुमा विनम्र अनुरोध छ कि पत्रिकाको स्वयंले अध्ययन गरौं एवं आफ्नो परिवार तथा इष्टमित्रलाई पनि पढ्न अनुरोध गरौं। यसका अलावा अन्य पाँचजना व्यक्तिलाई पढाउने प्रयास गरौं।*

*संसारको सबैभन्दा ठूलो दान ज्ञान दान हो, तपाईंको सानो दानले कसैको जीवनमा नयाँ मोड आउन सक्छ, जीवनमा सदाबहार छाउन सक्दछ। त्यसैले परमपूज्य सद्गुरुदेवहरुको महान् योजनालाई मूर्तरुप दिँदै चरितार्थ गराउन आजदेखि गुरु कार्यमा सहभागी बनौं र यस योजनालाई आ-आफ्नो तरीकाबाट सहयोग गरौं।*

*पत्रिकाको बिक्री हाम्रो उद्देश्य होइन, अपितु परमपूज्य सद्गुरुदेवहरुको असीम अनुकम्पाले प्रत्येक जन-जनमा गोरक्ष निखिल ऊर्जाको सञ्चार गरी आध्यात्मिक युगको पुनः निर्माण गर्नु हो। अस्तु।*

# गोरक्ष शब्दको निरुक्ति र स्तवन

शुद्धस्फटिकसंकाशं जटाजूट त्रिलोचनम् ।
निरञ्जन निराकारं निर्विकल्पं निरामयम् ॥
त्रिमूर्ति च त्रिलोकीशं विधिविष्णुमहेश्वरम् ।
विश्वरुपं सदाकारं गोरक्षं नाथदैवतम् ॥

**निर्मल स्फटिक समान उज्ज्वल जसको गौर वर्ण छ, जो जटाजूटधारी हुनुहुन्छ, जो त्रिनेत्र, मायारहित, निराकार, निर्विकल्प, (समाधिमा स्थित) र विशुद्ध (आत्मस्वरुप) तथा ब्रह्मा, विष्णु र महेश त्रिदेवस्वरुप र तीनै लोकका स्वामी हुनुहुन्छ, विश्व जसको रुप हो, सत्स्वरुप हो यस्ता श्रीगोरक्ष (गोरखनाथजी) लाई नमस्कार छ ।**

राजगुह्यमा श्रीकृष्णकृत गोरक्षनाथ स्तोत्रका अनुसार–

**गकारो गुणसंयुक्तो रकारो रूपलक्षणः ।**
**क्षकारेणाक्षयं ब्रह्म श्रीगोरक्ष नमोऽस्तुते ॥**

श्री गोरक्ष, हे गोरखनाथजी ! हजूरको नाममा गकार गुण संयुक्त, रकार रूपको उपलक्षण तथा क्षकार अविनाशी ब्रह्मरूप हुन् । हजूरलाई नमस्कार छ ।

**ब्रह्मणां च परं ब्रह्म रुद्रादिनां शिरोमणिः ।**
**त्रैलोक्यं निर्मितं येन श्रीगोरक्ष नमोऽस्तुते ॥**

श्री गोरक्ष (हे गोरखनाथजी) ! जो अनेकौं ब्रह्माहरूका पनि परब्रह्म र रुद्रादिका पनि (शिवगोरक्षस्वरूप) शिरोमणि हुनुहुन्छ तथा जसले तीनै लोकको निर्माण, सृजन गर्नुभयो, हजूरलाई प्रणाम छ ।

**सर्वगुणो गुणाभावो निर्गुणश्च गुणस्थितः ।**
**साकारो वा निराकारः श्रीगोरक्ष नमोऽस्तुते ॥**

श्री गोरक्ष (हे गोरखनाथजी) ! हजूर समस्त गुणहरूका आश्रय अथवा गुणरहित, गुणातीत र निर्गुण अथवा सगुण तथा साकार अथवा निराकार सबै हुनुहुन्छ । हजूरलाई नमस्कार छ ।

**स्वः पूजयन्ति देवास्तं मर्त्यलोके च मानवाः ।**
**पाताले नागलोकश्च श्रीगोरक्ष नमोऽस्तुते ।**

श्री गोरक्ष (हे गोरखनाथजी) ! स्वर्गलोकमा देवता, मृत्युलोकमा मनुष्य र पातालमा नागगण हजूरको पूजा गर्दछन्, हजूरलाई नमस्कार छ ।

**एकाकी वर्तते नित्यं भवपाशविवर्जितः ।**
**परं ब्रह्माक्षयं ज्योतिः श्रीगोरक्ष नमोऽस्तुते ॥**

श्री गोरक्ष (हे गोरखनाथजी) ! हजूर सांसारिक द्वन्द्वहरूको बन्धनबाट नितान्त मुक्त भएर नित्य परमात्मस्वरूपमा निवास गर्नुहुन्छ तथा अक्षय ज्योतिःस्वरूप परब्रह्म हजूरलाई प्रणाम छ ।

**श्रीगोरक्षस्येदं स्तोत्रं स्वयं कृष्णेन निर्मितम् ।**
**भक्तिभावविनिर्मुक्तो दासोऽहमिति भावयेत् ॥**

श्री गोरक्ष (नाथको सम्बन्ध) को यस स्तोत्र श्रीकृष्णद्वारा रचित हो । साधकले भक्तिभावपूर्वक विनिर्मुक्त भएर केवल 'म दास हुँ'– यस्तो भावना गर्नुपर्छ ।

**आकाशं मन्दिरं यस्य तारारत्नोपशोभितम् ।**
**हस्तमध्ये स्थितः शम्भोरभयं वरदायकम् ॥**

तारारूप रत्नले सुशोभित आकाश मन्दिरमा श्री गोरखनाथजी हातमा शम्भुको अभय एवं वरद मुद्रालाई धारण गरेर विराजमान रहनुहुन्छ ।

**नमन्ति ब्रह्मः विष्णुश्च सुरा नृमुनयस्तथा ।**
**ज्ञानसाराखिला सिद्धाः श्रीगोरक्ष नमोऽस्तुते ॥**

श्री गोरक्ष (हे गोरखनाथजी) ! हजूरलाई ब्रह्मा, विष्णु, देवगण, मनुष्य समुदाय, मुनि समूह, ज्ञानीहरूको दल, सबै सिद्धगण नमन गर्दछन्, हजूरलाई नमस्कार छ ।

**श्रीनाथं तु महात्मानं न जानाति स्वयं हरिः ।**
**किञ्चित्किञ्चिद्विजानाति महादेवो नमस्कृतम् ॥**

सबैद्वारा नमस्कृत्य महात्मा योगेश्वर श्रीनाथ तत्त्वलाई त स्वयं साक्षात् श्रीहरिले पनि जान्न सकिनँ, महादेव (शिव) ले भने केही जान्दछन् ।

**श्रीनाथश्चाक्षयो देवो देवानामप्यगोचरः ।**
**तत्पादौ चिन्तयेद्योगी अक्षयो योगनिश्चलः ॥**

श्रीनाथ देवताहरूका लागि पनि अगोचर, अविनाशी देवता हुनुहुन्छ, योगस्थ आत्मस्वरूपस्थ योगीले नै उहाँको ध्यान गर्दछन् ।

***कल्पद्रुमतंत्रअन्तर्गतको श्रीगोरक्षकवचका अनुसार–***

***योगीश्वरं आदिनाथं सर्वव्यापकं महेश्वरम् ॥***

*योगीश्वर, सर्वव्यापी, महेश्वरस्वरूप आदिनाथको ध्यान गर्नुपर्दछ ।*

# गोरक्ष-मन्त्रबिना सिद्धि हुँदैन

कल्पद्रुमतन्त्रमा श्रीगोरक्षसहस्रनामस्तोत्रमा यस्तो पाइन्छ–

**शुद्धस्फटिकसंकाशं जटाजूट त्रिलोचनम् ।**
**निरञ्जन निराकारं निर्विकल्पं निरामयम् ॥**
**त्रिमूर्ति च त्रिलोकीशं विधिविष्णुमहेश्वरम् ।**
**विश्वरूपं सदाकारं गोरक्षं नाथदैवतम् ॥**

निर्मल स्फटिक समान उज्ज्वल जसको गौर वर्ण छ, जो जटाजूटधारी हुनुहुन्छ, जो तीन नेत्र भएका, मायारहित, निराकार, निर्विकल्प (समाधिमा स्थित) र विशुद्ध (आत्मस्वरूप) तथा ब्रह्मा, विष्णु र महेश त्रिदेवस्वरूप र तीनै लोकका स्वामी हुनुहुन्छ, विश्व जसको रूप हो, सत्स्वरूप हो, यस्ता श्री गोरक्ष (गोरखनाथजी) लाई नमस्कार छ ।

**विद्यापतिर्मन्त्रनाथो ध्याननाथो निरञ्जनः ।**
**नित्यनाथो भूतपतिर्नित्यानन्दो महीपतिः ॥**
**सर्वाराध्यः पूर्णनाथो द्युतिनाथो द्युतिप्रियो ।**
**सृष्टिनाथः स्थितिनाथो हारनाथो महागुरुः ॥**
**रमणो रामभद्रश्च रामनाथो जनार्दनः ।**

गोरखनाथ, विद्यापति, मन्त्रनाथ, मन्त्रहरूका अधिकृत अधिकारी, ध्यानमा एउटा मात्र ध्येय निरञ्जन, नित्यनाथ, प्राणी मात्रका स्वामी, नित्यानन्दमा निमग्न रहनुहुने महीपति जगदीश्वर, सबैका आराध्यदेव पूर्णनाथ, तेजःस्वरूप, ज्योतिःस्वरूप, ब्रह्मा, विष्णु, महेशरूपबाट सृष्टि, स्थिति, संहारका कर्ता, महान् गुरु, भक्तहरूको आत्मामा रमण गर्ने रामभद्रस्वरूप रामनाथ र जनार्दनरूप हुनुहुन्छ ।

**घटस्थापनकार्याणि मुक्तिकार्यं विशेषतः ।**
**बिना गोरक्षमन्त्रेण न कर्तव्यं कदाचन ॥**
**आगमोक्तानि कर्माणि वैदिकानि तथैव च ।**
**बिना गोरक्षमन्त्रेण न सिद्धचन्ति कदाचन ॥**

देवपूजाको आरम्भमा कलश स्थापन आदि कार्य र विशेषरूपमा मुक्तिसम्बन्धी कार्य गोरक्ष मन्त्र प्रयोगबिना कहिले पनि गर्न हुँदैन । आगमास्त्रमा विहित तथा वैदिक कर्म पनि गोरक्ष मन्त्रको अनुष्ठानबिना कहिले पनि सिद्ध हुँदैन ।

# चार युगनाथ र चार प्रकारका मुक्ति

त्यस ललितापुरको उत्तरकोणमा अत्यन्त प्रकाशमय वायुलोक छ । त्यस लोकमा वायु शरीरधारी, सदा दान दिनमा महान् उत्साही, सिद्ध समूह, दिव्य ऋषिगण र प्राणायामका अभ्यासी अरू योगी तथा योगपरायण योगमहाज्ञान-चिन्तनमा तत्पर श्री गोरक्ष (गोरखनाथजी) आदि अनेकानेक अन्य अन्य योगीहरूको समुदाय निवास गर्दछन् ।

**सा**रसंग्रहमा ब्रह्माण्डपुराणको ललितपुरवर्णनको ललिताखण्डअनुसार–

तस्य चोत्तरकोणे तु वायुलोकेमहाद्युतिः ।
तत्र वायुशरीराश्च सदादानमहोदयाः ॥
सिद्धदिव्यर्षयश्चैव पवनाभ्यासिनोऽपरे ।
गोरक्षप्रमुखश्चान्ये योगिनो योगतत्पराः ॥

त्यस ललितापुरको उत्तरकोणमा अत्यन्त प्रकाशमय वायुलोक छ । त्यस लोकमा वायु शरीरधारी, सदा दान दिनमा महान् उत्साही, सिद्ध समूह, दिव्य ऋषिगण र प्राणायामका अभ्यासी अरू योगी तथा योगपरायण योगमहाज्ञान-चिन्तनमा तत्पर श्री गोरक्ष (गोरखनाथजी) आदि अनेकानेक अन्य अन्य योगीहरूको समुदाय निवास गर्दछन् ।

नायान्तरमितिप्रोक्तं हस्तविंशति चोन्नतम् ।
चतुर्नल्वप्रविस्तारं प्राग्वत्सोपानमण्डितम् ॥
तत्र नाथामहादिव्या योगशास्त्रप्रवर्तकाः ।
सर्वेषां मन्त्रगुरवः सर्वविद्या महातपाः ॥
चत्वारो योगनाथास्तु लोकानामिह गुप्तये ।
तुष्टाः कामेशदेवेन तेषां नामानि मे शृणु ॥
मित्रीशोड्डीशषष्ठीशचर्याख्यः कुम्भसम्भवाः ।
तेः सृष्टा बहवो लोका रक्षार्थ मे पादुकात्मकाः ॥
....दिव्यौघास्तेषां नामानि मे शृणु ।
मित्राद्या मानवौघाश्च सिद्धौघाः सुरतापसाः ॥
प्रायः सालोक्यसारूपयसायुज्यादिकसिद्धयः ।
महान्तो गुरवस्तास्तु सेवन्ते चतुरो गुरून् ॥

(उ०मा०उप०पा० ३७/३६-४१)

नाथहरूको निवास स्थानलाई यसप्रकार बताइएको छ कि त्यो बीस हात ऊँचो र चारनल्व-१६ सय हात विस्तार भएको छ तथा पहिले वर्णित सिँढीहरूजस्तै सुशोभित छ । (नल्वको अर्थ- जमीन नाप्ने चार सय हातको एउटा मापक हो) त्यस स्थानमा परमदिव्य योगशास्त्रका प्रवर्तक, सबैलाई मन्त्र दिने गुरु, समस्त विद्याहरूमा निष्णात, योगमार्गका आचार्य चारै नाथ निवास गर्दछन्, जसलाई कामेश्वर भगवान् शिवले लोकको रक्षाका लागि सन्तुष्ट अथवा प्रसन्न भएर नियुक्त गर्नुभएको हो । उनीहरूको नाम मबाट सुन– उनीहरू मित्रीश, उड्डीश, षष्ठीश र चर्या हुन् । यिनीहरू चारै घडाबाट उत्पन्न भएका हुन् । यिनीहरूले धेरै पादुकात्मक लोकहरूको रचना गरेका छन् र त्यसको रक्षाका लागि दिव्य समुदायको पनि कल्पना गरेका छन् । ती समुदायको नाम मबाट सुन– मित्रीश आदि मानव समुदाय र देवर्षि सिद्ध समुदाय हुन् । प्रायः सालोक्य, सामीप्य, सायुज्य आदि सिद्धिहरू तथा महान् गुरु आदिले यी चारै (नाथ) गुरुहरूको सेवा गर्दछन् । (गोरक्षसिद्धान्तसंग्रहबाट)

# महायोगी श्री गुरु गोरखनाथ

विश्वकै आस्थाका केन्द्र श्री श्री महायोगी गुरु गोरखनाथको उत्पत्ति विभिन्न समय र कालखण्डमा भएको अनुमान लगाइएको पाइन्छ। महायोगीको उत्पत्ति उहाँले त्यतिबेला दिनुभएको महत्त्वपूर्ण शैक्षिक, सामाजिक, धार्मिक आदि योगदानहरूको आधारमा दसदेखि पन्ध्रौं शताब्दीतिर भएको उल्लेख गरिएको पाइन्छ। उहाँको उत्पत्तिसम्बन्धमा भारतका लेखकहरूले धेरै ठाउँमा उल्लेख गरेका छन्। उल्लिखित ती घटनाहरूलाई नै अन्य लेखकहरूले सन्दर्भको रूपमा लिने गरिएको पाइन्छ।

महायोगीको उत्पत्ति पाकिस्तानको रावलपिण्डीमा बाह्रौं शताब्दीतिर भएको जनश्रुति पाइन्छ। जनश्रुति यसप्रकार छ– हालको पाकिस्तानमा पर्ने रावलपिण्डीको गाउँको कुनै एक घरमा 'अलख-निरंजन'को आवाज सुनिन्छ। यस आवाजसँगै कुनै बाबा भिक्षा माग्न आएको ठानी घरभित्रबाट एउटी महिला बाहिर निस्किन्छिन्। महिला चिन्ताग्रस्त देखिएकीले बाबाले त्यसको कारण सोध्नुहुन्छ।

विवाह भएको धेरै वर्ष भइसकेको र हालसम्म पनि आमा बन्ने सौभाग्य प्राप्त नभएको, सबै छिमेकीहरूले अलच्छिनी, पापिनी भनी लाञ्छना लगाएर अपहेलना गरेको दु:खेसो ती महिलाले बाबासमक्ष राख्छिन्। बाबालाई दया जाग्छ र उहाँले बुटी देखाउँदै भन्नुहुन्छ– 'भगवान् शिवको कृपाले छिट्टै नै तिम्रा सुसंस्कारित छोराको जन्म हुनेछ।' एउटी छिमेकी महिलाले ईर्ष्यावश नानाथरि कुरा गरेर महिलालाई बुटी खानबाट रोक्दछिन्। उनले बुटीलाई गोबर भएको ठाउँमा लगेर फ्याँक्छिन्।

बाह्र वर्षपछि बाबा पुन: महिलाको घरमा आउनुहुन्छ। छिमेकीको नानाथरिको कुरा सुनेर आफूले बुटी फालिदिएको उनले बाबालाई बताउँछिन्। बाबाले बुटी फालेको ठाउँमा गएर जोडसँग 'अलख निरञ्जन' भनेर बोलाउनुहुँदा एक दिव्य अत्यन्त सुन्दर गौरवर्णयुक्त तेजस्वी बालक निस्की बाबाको नजिक जानुहुन्छ। बाबा र दिव्य बालक त्यहाँबाट अन्तर्धान हुनुहुन्छ। बाबा हुनुहुन्थ्यो योगीराज मत्स्येन्द्रनाथ र दिव्य बालक हुनुहुन्थ्यो श्री श्री महायोगी गुरु गोरखनाथ। गोबरबाट निस्कनु भएकोले गुरु मत्स्येन्द्रनाथले उहाँको नाम गोरखनाथ राख्नुभयो।

**बाबाले बुटी फालेको ठाउँमा गएर जोडसँग 'अलख निरञ्जन' भनेर बोलाउनुहुँदा एक दिव्य अत्यन्त सुन्दर गौरवर्णयुक्त तेजस्वी बालक निस्की बाबाको नजिक जानुहुन्छ।**

नेपाली परम्परालाई आधार मानेर 'भारतीय दर्शन

प्रकाश'मा राधेश्याम शर्माले लेखेका छन्– 'महादेवले पुत्रको आकांक्षा राख्ने नारीलाई विभूति दिनुभयो । उक्त नारीले अविश्वास गरी गोबरको थुप्रोमा फालिदिइन् । बाह्र वर्षपछि महादेव पुनः आई अनुसन्धान गर्दा उक्त स्थानबाट गोरक्षनाथको उत्पत्ति भयो ।' गुरु गोरखनाथ दक्षिण दिशातर्फ बड़व नामको देशमा महामन्त्रको प्रसादबाट प्रकट हुनुभएको थियो[1] जसको उल्लेख गोरखपुरबाट प्रकाशित योगवाणी (वर्ष-२, अंक २, १९७७ पृष्ठ १८-१९) मा पनि भएको छ ।

भगवान् शिवका एक भक्तले सन्तानोत्पत्तिको इच्छा राखेर भगवान् शिवको प्रार्थना गरे । भगवान् शिवले खुशी भई शिवधुनीबाट भस्म झिकेर दिनुभयो । भस्म उनले आफ्नी पत्नीलाई खान दिएछन् । पत्नीले लोकको डरले भस्मलाई फोहरमा फालिदिइन् । त्यो भस्म खेर गएन । त्यसैबाट एक होनहार दिव्य बालकको उत्पत्ति भयो

**महायोगी श्री गुरु गोरखनाथ शिव नै हुनुभएकोले शिव गोरक्षको रूपमा आदरका साथ श्रद्धा, भक्ति र विश्वासको केन्द्र मानी धेरैले वर्णन गरेका प्रसंगहरू शिव पुराणमा पाइन्छन् ।**

र भगवान् शिवले उक्त बालकको नाम गोरक्षनाथ राख्नुभयो ।[2] भिक्षाटनको बेला मत्स्येन्द्रनाथले गोदावरी नदीको किनारमा एक सदाचारी ब्राह्मणदम्पति सुराज एवं सरस्वतीको पुत्र प्राप्तिको इच्छापूर्ति गर्न भस्म दिनुभयो । त्यहीँबाट गोरक्षनाथ आविर्भूत हुनुभयो ।[3]

विदेशी लेखक ब्रिग्सका अनुसार यस संसारको सृष्टि हुँदा नै गुरु गोरखनाथ धुनी जगाएर तपस्यारत हुनुहुन्थ्यो । विष्णु भगवान् कमलको फूलबाट निस्कँदा गुरु गोरखनाथ पातालमा हुनुहुन्थ्यो र ब्रह्माजीले संसार सृष्टि गर्न लाग्दा फोहर पानीको कारणले समस्या पर्‍यो । उहाँले श्री श्री महायोगी गुरु गोरखनाथसँग सहायता माग्नुभएको र महायोगीले धुनीबाट खरानी झिकेर दिनुभयो ।

## गुरू गोरक्ष नामको अर्थ

**गोरक्षति गोरक्षः रक्षनीति रक्ष, ग्वांरक्ष गोरक्षः**

गोप वाच्यको जसले रक्षा गर्छ उहाँलाई गोरक्ष भनिन्छ । 'गो' शब्दको अर्थभित्र समाहित सम्पूर्णको रक्षा गर्नेवाला नै गोरक्ष हो । स्वर्ग, वाण, पशु, वाणी, वज्र, दिशा, नेत्र, किरण, पृथ्वी, जल, सूर्य, गोरु, यज्ञ, सुरभि, गाई आदि गो शब्दका वाच्य हुन् । यिनीहरू सबैका रक्षाकर्ता, पालन-पोषण, सुरक्षा सम्पूर्ण संचालकको नाम नै गोरक्ष हो । सम्पूर्ण सृष्टिलगायत र सृष्टिको रक्षा गर्ने गोरक्षको इतिहास प्राचीन, अविनाशी, अनादि भएकोले उहाँको जन्म, मृत्यु आदिको प्रश्न नै उठ्दैन ।

त्यस्तै वेदका मन्त्रहरू जस्तो यजुर्वेद, अथर्ववेद आदिका मन्त्रहरूमा 'रक्ष' को अर्थ त्यही पाइन्छ जुन गोरक्षको अर्थ सर्वत्र प्रसिद्ध छ । ब्रह्माण्डपुराण हयग्रीव संवाद ललितापुर वर्णनमा उल्लेख पाइन्छ–

**तस्य चोत्तरकोणे तु वायुलोको महाद्युतिः । तत्र वायुशरीराश्च सदानन्द महोदयाः ॥ सिद्धा दिव्यर्षवश्चैव, पवनाभ्यासिनोऽपरे । गोरक्ष प्रमुखाश्चान्ये, योगिनो योगतत्पराः ॥**

अर्थात्, उत्तर कोण महाद्युति वायुलोकमा आनन्दमा निमग्न सिद्ध योगीराज गुरु गोरक्ष निवास गर्नुहुन्छ र उहाँका साथमा दिव्य

योगीहरू रहनुहुन्छ। त्यस्तै स्कन्दपुराणअन्तर्गत केदारखण्डको ४२ औँ अध्यायमा भगवान् आदिनाथ शिव जगदम्बिके माताको प्रश्नको उत्तर दिँदै गोरक्षनाथ आश्रमको बारेमा यसरी व्याख्या गर्नुहुन्छ–

**तस्माद् दक्षिणतो देवि ! गोरक्षाश्रम रक्षकः । यत्र सिद्धो महादेवि ! गोरक्षो वसतेऽनिशम् ॥१॥**

**तल्लिङ्गन्तु प्रवक्ष्यामि, शृणु पुष्यतमं स्थलम् । महातप्तजलं तत्र वर्तते, सर्वदैव हि ॥२॥**

'एक अत्यन्त रमणीय एवं पवित्र गोरक्षाश्रम छ जहाँ सिद्धाधिराज गोरक्षनाथ निवास गर्नुहुन्छ जुन अत्यन्त पुण्यतम् स्थान हो' भनी पार्वतीलाई बताइएबाट पनि गुरु गोरक्षको महिमा, उहाँको उच्चता परापूर्वकालदेखि नै सबैको लागि वर्णनयोग्य र उदाहरणीय मान्ने गरेको पाइन्छ। महायोगी श्री गुरु गोरखनाथ शिव नै हुनुभएकोले शिव गोरक्षको रूपमा आदरका साथ श्रद्धा, भक्ति र विश्वासको केन्द्र मानी धेरैले वर्णन गरेका प्रसंगहरू शिव पुराणमा पाइन्छन् । शिवपुराणको सप्तम अध्यायमा सृष्टिकर्ता ब्रह्माले शिवको अवतार भनी वर्णन गरेका यी श्लोकहरू प्रासङ्गिक होलान्–

**शिवो गोरक्षरूपेण,**
**योगशास्त्रं जु**
**गोपह । यमाद्यङ गै**
**र्यथास्थाने, स्थापिता**
**योगिनोदपिच ॥**

द्वापरयुगको अन्तमा ऋषभबाट नवनारायणको जन्म भयो । नारदको परामर्शबाट नवनारायण योगमार्गद्वारा त्रिताप संतापित लोकको उद्धारका लागि कैलाशमा महादेवनिकट जानुभयो । महादेवको कृपाबाट गोरक्षनाथको प्रकट भयो ।[४]

अठारौँ शताब्दीको अन्त्यतिर जन्मनुभएका पृथ्वीनारायण शाहलाई बूढा योगीको स्वरूपमा उपस्थित भई आशीर्वाद दिनुभएको, दही खान दिनुभएको घटना नेपालको इतिहासमा स्वर्णाक्षरले लेखिएको छ । राजा द्रव्य शाहलाई गोरक्षाधीश भनेर सम्बोधन गरिनु, त्यस्तै अन्य राजाहरूलाई पनि गरिनुबाट गुरु गोरक्षको प्रभावको बारेमा उल्लेख गर्न असम्भव नै देखिन्छ । हालसम्म पनि नेपालको मुद्रामा गुरु गोरखनाथको नाम तथा पादुका अंकित भएको पाइन्छ ।

**पृथ्वीनारायण शाहलाई बूढा योगीको स्वरूपमा उपस्थित भई आशीर्वाद दिनुभएको, दही खान दिनुभएको घटना नेपालको इतिहासमा स्वर्णाक्षरले लेखिएको छ ।**

यसरी नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी गुरु गोरखनाथकै कृपा, आशीर्वादले नेपालीहरू विश्वमा वीर गोर्खालीको नामबाट गर्व गर्छन् । खुकुरीको भरमा अंग्रेजहरूलाई परास्त गर्नु गुरु गोरखनाथकै कृपाको परिणाम हो भन्दा अत्युक्ति

नहोला । महायोगी समय, कालखण्डभन्दा माथि, नाथहरूका महानाथ, देश, काल, स्थानभन्दा धेरै माथिका अद्वितीय महापुरुष हुनुहुन्छ । यसैले पनि उहाँका लीलाहरू बुझ्ने क्षमता, सामर्थ्य सामान्य पृथ्वीबासीहरूमा हुने कुरै भएन । लेखकको पनि एउटा सीमा हुन्छ, अनुसन्धान गर्नेले पनि प्राप्त सामग्रीको आधारमा मात्र अनुसन्धान गर्न सक्दछन्, इतिहास लेख्नेले पनि प्राप्त प्रमाणहरू, उपलब्ध शिलालेख, ऐतिहासिक किंवदन्ती, कथा आदिलाई माध्यम बनाएर मात्रै लेख्न सक्दछन् । यसरी प्राप्त सामग्रीहरूलाई मात्रै आधार बनाई गरिएका अनुसन्धान र इतिहासले पूर्णताको परिचय दिन सक्दैन । यी सम्पूर्ण प्रमाण र इतिहासलाई समेटेर साधनाको माध्यमद्वारा र अनेकौं सिद्धात्माहरूसँग सम्पर्क गरेर भए पनि महायोगीको बारेमा सत्य, तथ्य र वास्तविकतालाई सम्पूर्ण समाजसमक्ष राख्दै उहाँको उच्चता र महानतालाई पूर्णरूपले आदर, सम्मान दिलाउँदै उहाँकै निर्देशनमा आध्यात्मिक युग निर्माणको लागि प्रयत्नशील सिद्धाश्रम शक्ति केन्द्रले आफ्नो प्रयत्नलाई निरन्तरता दिँदै अघि बढिरहेको छ ।

ब्रह्माजीलाई समेत सृष्टि गर्न सहायता गर्नुहुने गुरु गोरखनाथ सृष्टिभन्दा पहिले पनि विराजमान हुनुहुन्थ्यो भन्ने प्रमाणित हुन्छ । यसबाट सृष्टिजगत्भन्दा बाहिरको अस्तित्त्वको पनि संकेत मिल्दछ । त्यो 'बाहिर' सृष्टिभन्दा पहिले पनि थियो, सृष्टिकालमा पनि छ र प्रलयकालमा पनि रहन्छ ।

**खुकुरीको भरमा अंग्रेजहरूलाई परास्त गर्नु गुरु गोरखनाथकै कृपाको परिणाम हो भन्दा अत्युक्ति नहोला ।**

यही शाश्वत सत्यलाई बुझ्न नसक्दा मानिसहरूबीच भ्रम सृजना भएको छ । यही भ्रमले गर्दा गुरु गोरखनाथको प्रकरणमा विभिन्न विवादहरू सृजना भएका छन् । सत्य कुरा त यो हो कि जसको न जन्म छ न त मरण, जो सदा सदा रहनुहुन्छ, उहाँको आगमन कुनै पनि कालमा हुन्छ र हुन सक्छ । त्यो काल वा समयमा भएका उहाँका प्राकट्य प्रकरणलाई लिएर यति-उति शताब्दीमा उहाँ फलाना ठाउँमा जन्मनुभएको वा देखिनुभएको भन्ने विषयलाई महत्त्व दिएर उहाँको समय र स्थान निर्धारण गर्नु बुद्धिमानी होइन । बरु हामीले सबैले जुन जुन समय र कालखण्डमा उहाँ यस धरामा प्रकट हुनुभयो, तत्तत् समय र स्थानलाई पनि सत्य मानेर उहाँको प्राकट्यको ती अवधिलाई लीला मान्दा नै विवादरहित हुन जानेछ । समस्त चराचर जगत्को कल्याणका लागि श्री शिव गोरक्षको रूपमा प्रकट हुनुहुने गुरु गोरखनाथ चारै युगमा जहाँ, जहिले र जस्तोसुकै अवस्थामा प्रकट हुनुहुने भएकाले वर्तमान यस समयमा पनि उहाँ कतै न कतै प्रकट हुनु भएर कुनै न कुनै लीला देखाउँदै गर्नुभएको कुरालाई भने नकार्न सकिन्न । हामीले त अनुसन्धान गर्ने हो, उहाँको प्रबल भक्ति गर्ने हो । उहाँ खुशी हुनु भएमा उहाँको प्राकट्य रहस्यलाई अझै उजागर गर्न सकिएला । जय गुरुदेव !

सन्दर्भग्रन्थहरू : १. 'गोरक्ष सहस्रनाम' । २. जर्ज वेस्टन ब्रिग्स, गोरखनाथ एण्ड द कानफट्टा योगीज् । ३. योगीसम्प्रदायाविष्कृति । ४. योगीसम्प्रदायाविष्कृति ।

## महायोगीको दृष्टिमा

# महायोगी

**परमपूज्य सद्‌गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूले श्री श्री महायोगी गुरु गोरखनाथको सम्बन्धमा दिनुभएको सारगर्भित प्रवचन–**

गुरु गोरखनाथले संस्कृत खासै पढ्नुभएको थिएन । तर पनि उहाँले गोरखवाणीमा संस्कृतका अत्यन्तै सुन्दर श्लोकहरूलाई उतार्नुभयो । त्यस बेलाको प्राकृत (बोलचालको) भाषाबाट उहाँले सबै कुरा व्यक्त गर्नुभएको छ । जति साबर मन्त्रहरू छन् त्यसमा अधिकांश गुरु गोरखनाथबाट निर्मित मन्त्रहरू छन् । ती सबै मन्त्रहरू आफैमा सिद्ध छन् । ती शास्त्रीय मन्त्रभन्दा बढी प्रामाणिक छन् र प्रभावशाली छन् । ती सबै श्लोकहरू छानेर एउटा छुट्टै पुस्तकको रचना गर्न सकिन्छ भने तिनबाट गुरु गोरखनाथको पूरा जीवनी व्यक्त गर्न सकिन्छ ।

गुरु गोरखनाथको बारेमा हामीले ज्यादै थोरै पढ्न, बुझ्न, सुन्न पाएका छौं । गुरु गोरखनाथलाई भगवान् शिवको अवतार मानिन्छ । शंकराचार्यलाई पनि शिवावतार मानिन्छ । अवतारी पुरुष र सामान्य पुरुषमा बाहिरी हेराइबाट ठूलो फरक पाउन सकिन्न किनकि सांसारीक मानिसहरूको पनि आँखा, नाक, कान, हात, गोडा त्यस्तै हुन्छन् जस्तो अवतारी पुरुषहरूको हुने गर्छन् । अवतारी पुरुष पनि रुन्छन्, हाँस्छन्, जप, ध्यान, साधना गर्छन्, गुरुभक्त हुन्छन्, चिन्तित हुन्छन्, आत्तिन्छन्, दुःख भोग्छन् र सुख चाहन्छन् । वनबासमा रावणले सीतालाई हरण गर्दा रामले पनि रूख, पात, वृक्ष, लता, झाडी आदिसँग सीता कहाँ छिन् भनी प्रश्न गरेका थिए ।

**हे खग हे मृग हे मधुकर बैनी,**
**कहाँ गई सीता मृग नयनी ।।**

हे पंक्षी ! तिमीहरू भन मेरी सीता कता गइन् । हे मृग ! तिमी छिटो दौडन्छौ, तिमीले देख्यौ कि मेरी सीता कता गइन् ? हे भमराहरू ! हे मौरी हो ! तिमीहरू शायद मेरी सीता गएको ठाउँ भन्न सक्छौ होला । मेरी सीतालाई कसले लिएर गयो । यसरी सांसारीक व्यक्तिजस्तै राम पनि दुःखित बनेका थिए । त्यसैगरी अवतारी पुरुष सधैं खुशी, ज्यादै आनन्दित प्रसन्न नै भइरहन्छन् र सांसारीक व्यक्ति सधैं दुःखी नै भइरहन्छन भन्ने पनि होइन ।

गुरु गोरखनाथले मानवकल्याणको लागि एउटा अत्यन्तै सरल बाटो देखाउनुभएको छ । उहाँले मान्छेको प्रारम्भ त पाँच वर्षको उमेरपछि हुन्छ भनेर बताउनुभएको छ । त्यसभन्दा अगाडि त उसलाई बालक भनिन्छ । पाँच वर्षपछि उसको

यज्ञोपवीत संस्कार हुन्छ। त्यसपछि ऊ द्विज बन्दछ। त्यसपछि उसमा समयका साथ सोच, चिन्तन र विचारधारा आउन थाल्दछ। उसको जस्तो विचार बढ्दै जान्छ, त्यस्तै ज्ञानोदय हुन्छ, त्यस्तै साथीभाइ प्राप्त हुन्छन्। बाबु, आमा र घरको संस्कारले जीवनभरि नै उसमा प्रभाव पारिरहन्छ। पाँच वर्षदेखि बाह्र वर्षसम्मको समय निर्माण समय हो। यही बेला मानिस राक्षस पनि बन्न सक्छ अथवा दुष्ट पनि बन्न सक्छ। त्यही समयको प्रभावभित्र ऊ अत्यन्तै सत्यवादी, आध्यात्मिक, त्यागी जे बन्ने हो त्यही बेला उसमा त्यस्तो स्वरूपको निर्माण हुन जान्छ। यदि घरको वातावरण राम्रो छैन भने र उसका बाबु दुष्ट स्वभावका छन् भने उसको चित्तमा दुष्ट स्वभाव अंकित हुन जान्छ। यदि बाबु लालची, स्वार्थी छन् भने उसको स्वभाव पनि लालची स्वार्थी बन्न पुग्छ किनकि ऊ रातदिन त्यही संस्कारमा हुर्केको हुन्छ। पिता कपटी, बेइमान छन् र भ्रष्टाचारबाट धन कमाउँछन्, भोगी छन्, पापी छन्, धर्मात्मा छन्, त्यागी छन्, जस्तो उसको घर र परिवारको वातावरण छ, उसको चित्तमा तिनै कुराहरू स्थायीरूपमा अंकित हुन पुग्छन्।

जुन वातावरणबाट उसका साथीभाइ आएका छन्, त्यसै वातावरणमा वर्षौं बिताउँदै आएको हुन्छ। त्यही कुराले जस्ताको तस्तै प्रभाव पार्ने हुन्छ। पुरुष, स्त्री जोसुकै होस्, त्यस संस्कारबाट मुक्त हुन ज्यादै कठीन हुन्छ किनकि रगतमा नै त्यस्तो संस्कार पूरै मिसिइसकेको हुन्छ। उसको निर्माण त्यसरी नै हुन्छ।

**गुरु गोरखनाथले भन्नुभएको छ कि वैराग्य र गृहस्थ दुवैको बीचमा मनुष्य रहेको छैन। मनुष्य त त्याग र विषय भोगको बीचमा रहेको छ।**

त्यसकारण गुरु गोरखनाथ भन्नुहुन्छ– त्यो अवस्था वास्तवमा मनुष्यजीवन नै होइन। त्यो निर्माण अवस्था हो जुन उसको हातमा हुँदैन, उसलाई त्यस कुराको ज्ञान पनि हुँदैन।

गुरु गोरखनाथ भन्नुहुन्छ– जब मनुष्यको जन्म हुन्छ, त्यसबेला ऊ दुई किनाराको बीचमा उभिएको हुन्छ। त्यो के हो भने एउटा घोर विषयवासना र अर्को घोर त्याग। त्याग शब्दको प्रयोग गुरु गोरखनाथबाट भएको छ। उहाँ भन्नुहुन्छ– विषयवासनाको अर्थ गृहस्थ होइन। गृहस्थ त एउटा कर्तव्य हो जसले जीवनको निर्माण गर्दछ। भोगको अर्थ मनमा चिन्तन आउनु, सबैको भन्दा राम्रो घर होस्, कार होस्, आम्दानी होस्, धेरै गरगहना, राम्रो कपडा, धनसम्पत्ति जम्मा गर्न सकूँ भन्ने हो। यस्तो चाहना लिनु नै भोग हो। यसको गृहस्थसँग सम्बन्ध हुँदैन। यसरी नै त्यागसँग वैराग्यको सम्बन्ध हुँदैन।

यसकारण गुरु गोरखनाथले भन्नुभएको छ कि वैराग्य र गृहस्थ दुवैको बीचमा मनुष्य रहेको छैन। मनुष्य त त्याग र विषय भोगको बीचमा रहेको छ। मानिसले बाह्र वर्षदेखि नमरुन्जेलसम्म त्याग र विषय भोगको बीचमा फन्को मारिरहेको हुन्छ। ज्यादै कम मानिस हुन्छन् जो विषयवासनाबाट आफूलाई अलग्याउन सक्षम हुन्छन्। निर्माण समय बितेपछि व्यक्तिको मनमा अर्को एक भावना, चिन्तन, एक विचार प्रकट हुन जान्छ। म के गरुँ ? उसको अगाडि विषयवासना उभिएको हुन्छ। ऊ देख्छ– पत्नी छिन्, परिवार छ, समाज छ। कैयौं इच्छाहरू छन्। जे जति इच्छा, विचार, चिन्तन छन्, ती सबै नै विषयवासनातिरका मात्र छन्। त्यागपट्टिका छँदै छैनन्।

तपाईं जसलाई संन्यास भन्नुहुन्छ, त्यही कुरालाई म त्याग भन्ने गर्दछु। त्यही नै जीवन निर्माण हो। जीवनको आनन्द उन्मुक्तता अद्वितीय बन्नमा मात्र छ। बीचमा रहनको लागि होइन। म त तपाईंलाई यसरी भन्न चाहन्छु कि सक्नुहुन्छ भने सबैभन्दा ठूलो डाँका बन्नुहोस्। तपाईंको नाम सुन्नासाथ मानिसहरू डराऊन्। इमान्दार बन्नुहुन्छ भने तपाईंभन्दा दोस्रो इमान्दार अरू बन्नै नसकून्। त्यागी हुनुहुन्छ भने सर्वश्रेष्ठ हुनुहोस्। जे बन्नुहुन्छ अद्वितीय बन्नुहोस्। बीचमा त करोडौं करोड अल्झिरहेका छन्, झुमिरहेका छन्। संसारका ९९.९ प्रतिशत व्यक्तिहरू बीचमा अल्झिरहेका छन्।

गोरख पन्थ भारतवर्षमा सबैभन्दा ठूलो पन्थ मानिन्छ– बुद्ध पन्थभन्दा पनि ठूलो; जैन पंथ, हिन्दू पन्थभन्दा पनि ठूलो छ। एउटा व्यक्तिले धेरै ठूलो घटना घटाएर देखाउनुभयो,

त्याग कस्तो हुन्छ देखाउनुभयो । नवीन मन्त्रको रचना गर्नुभयो, नयाँ चिन्तन दिनुभयो, नवीन विचारधारा दिनुभयो ।

यस श्लोकमा उहाँले बताउनुभयो– त्याग कहाँबाट शुरु गर्न सकिन्छ ? हामी केही पनि त्याग गर्न सक्दैनौं । हाम्रो जीवनमा त्यागजस्तो कुनै चीज नै आएको हुँदैन, हाम्रो जीवनमा त्याग भन्ने कुनै चीज नै छैन । हाम्रो जीवनमा केवल विषय र वासना छ । हामी बाहिरी वातावरणसँग दुई मिनेटमै गाँसिइसकेका हुन्छौं, त्यसबाट अलग हुन सक्दैनौं । जब बाहिर गएर निक्लन्छौ र फेरि भित्र आउँछौं हामीमा विषयवासनाको रंग चढेको हुन्छ । वास्तविकता यो हो भने २४ घण्टै हामीसँग गुरु बस्न सक्नुहुन्न । यदि तपाईंको हृदयमा गुरु हुनुहुन्न भने तपाईंको साथ गुरु रहनुहुने छैन भनेर जाने हुन्छ । शरीरसँग गुरुलाई जोडेर राख्नुपर्ने आवश्यकता पनि छैन । गुरुलाई त हृदयमा धारण गर्नुपर्छ ।

गुरु गोरखनाथले श्लोकमा बताउनुभएको छ– जब व्यक्ति एक्लै जन्मन्छ, ऊसँगै सबै जन्मिएका हुन्छन्– हजूरबुबा, हजूरआमा, मामा आदि । तब उसले सोच्छ, सबै नै मेरा साथ छन् र ऊ यो पनि सोच्छ कि म मर्दा सबै सँगै मर्छन्, सारा समाजले उसको साथ दिनेछ, पत्नी, छोरी पनि सँगै जान्छन् । तर यस्तो हुनै सक्दैन । ऊ एक्लो जन्मिएको थियो । जन्मँदा उसको शरीरमा एउटा सानो कपडाको टुक्रा पनि थिएन । मरेर भएर चितामाथि सुत्दा पनि ऊ एक्लो हुन्छ । वास्तविकता यस्तो देखेर पनि यस जालमा हामी किन अल्झिएका छौं ? गुरु गोरखनाथका अनुसार त्यो यसकारण कि हामी आफैमा ज्यादै बुद्धिमान मूर्ख हौं । हामी आफैलाई बुद्धिमान ठानिरहेका छौं तर वास्तवमा हामी पूर्ण मूर्ख छौं ।

बुद्धिमान् यसकारण ठान्ने प्रयास गरेका छौं कि जीवनमा आफूले धेरै उतारचढाव भोगिसकियो, पाँच छोरा जन्माइयो । मेरो साथमा धन छ, घर छ । यस्तो अवस्थामा खुशी रहन्छ व्यक्ति, त्यही मृगतृष्णामा आफूलाई धेरै प्रसन्न राखेका हुन्छन् मानिसले ।

गुरु गोरखनाथ भन्नुहुन्छ– 'यी सबैबाट पार पाउनु नै जीवनको त्याग हो र बिस्तारै-बिस्तारै हामीले यी जन्जालबाट पार पाउन सकिन्छ । तपाईं बिस्तारै मनलाई शुद्ध गर्दै रहनुस् । तर मन तब मात्र शुद्ध हुन सक्छ यदि तपाईंभित्र गुरु हुनुहुन्छ भने । गुरुको शब्दलाई आधार बनाएर नै त्यागमय बन्न सकिन्छ । गुरुले हरेक क्षण तपाईंलाई सशरीर बाटो देखाउन त सक्नुहुन्न, यो सम्भव पनि छैन । तर जुन गुरु तपाईंभित्र हुनुहुन्छ उहाँले नै यो गलत छ, बाहिरका व्यक्तिहरुसँग बच्नु आवश्यक छ, शरीरलाई शुद्ध राख्नु आवश्यक छ, बाहिर केही खानुको सट्टा पानी पिएर जीवन गुजार, घरमै राम्रोसँग भोजन गर्नुपर्दछ, मासु खानाले या चुरोट पिउनाले जीवन बन्न

**गुरुले हरेक क्षण तपाईंलाई सशरीर बाटो देखाउन त सक्नुहुन्न, यो सम्भव पनि छैन । तर जुन गुरु तपाईंभित्र हुनुहुन्छ उहाँले नै यो गलत छ, बाहिरका व्यक्तिहरुसँग बच्नु आवश्यक छ, शरीरलाई शुद्ध राख्नु आवश्यक छ, बाहिर केही खानुको सट्टा पानी पिएर जीवन गुजार, घरमै राम्रोसँग भोजन गर्नुपर्दछ, मासु खानाले या चुरोट पिउनाले जीवन बन्न सक्दैन भनेर भन्न सक्नुहुन्छ ।**

सक्दैन भनेर भन्न सक्नुहुन्छ ।

त्यसबेला जुन गुरुशक्ति तपाईंभित्रबाट आउँछ, तपाईंलाई आज्ञा, प्रेरणा र चिन्तन प्रदान गर्दछ त्यसैले बताउँछ कि तपाईं कति इमान्दार बन्न सक्नुहुन्छ, कति कर्मनिष्ठ, कर्तव्यनिष्ठ बन्न सक्नुहुन्छ, कति त्यागमय बन्न सक्नुहुन्छ किनकि इमान्दारी र कर्मनिष्ठताको अर्थ निरन्तर काममा डुबिरहनु हो ।

काम पनि दुई प्रकारका हुन्छन्– त्यागमय काम र विषयमय काम । यी दुईमध्ये कुनै एउटा मात्र गर्न सकिन्छ । दुवै एकैसाथ गर्न सकिँदैन । दूध र अमिलो एकै साथ रहन सक्दैन ।

छिमेकीमा कसैको मृत्यु हुँदा धेरैलाई थाहा नहुन सक्छ । हरिलालजी बित्नुभयो– न तपाईंलाई थाहा हुन्छ, न मलाई । शववाहन आउँछ, लाशलाई घाटमा लगेर जलाइदिन्छन् । यही जीवन फेरि प्राप्त गर्न सकिन्न । पछि कस्तो झुपडीमा अथवा गरिबीमा जन्मनुपर्छ, थाहै हुँदैन । त्यसैले जुन जीवन अहिले हामीसँग छ, यदि त्यसको प्रयोग हामीले गर्न सकेनौं भने, जुन हीरा हामीसँग छ त्यसको प्रयोग गर्न सकेनौं भने त जीवनको अर्थ नै के रह्यो र ? हामीले के प्राप्त गर्न सक्यौं र ? तपाईंको हातमा गुरु हुनुहुन्छ, इमान्दारिता छ, सत्यनिष्ठता, कर्तव्यनिष्ठता, कर्मनिष्ठता र त्याग छ । यी पाँच कुरा तपाईंसँग छन्, यदि यिनको प्रयोग गर्न सक्नुभयो भने । तर यसको दुरूपयोग पनि गर्न सक्नुहुन्छ । त्यागको दुरूपयोग गर्न सक्नुहुन्छ र सदुपयोग पनि । भोगी पनि बन्न सक्नुहुन्छ, त्यागी पनि बनेर देखाउन सक्नुहुन्छ । इमान्दारीको मुकुण्डो लगाएर भित्रभित्रै बेइमान पनि बन्न सक्नुहुन्छ । मुखमा रामराम बगलीमा छुरा पनि बन्न सक्नुहुन्छ । पाँच वर्षदेखि बाह्र वर्षको अवस्थामा जुन तपाईंको चित्तमा अंकित भएको छ, त्यसलाई मेट्न अत्यन्त कठीन हुन्छ । जसले जति मेट्न सक्छ, उसले त्यति नै जीवनमा अनुकूलता प्राप्त गर्न सक्छ । त्यागमय जीवनबाट के पाइन्छ ? यसबाट तपाईं गोरख बन्नुहुन्छ, कृष्ण बन्नुहुन्छ, राम बन्नुहुन्छ, बुद्ध, महावीर, गुरु नानक बन्नुहुन्छ । उच्चकोटिको विद्वान् बन्नुहुन्छ र रकफेलर बन्नुहुन्छ ।

रकफेलरको दैनिक आम्दानी ४० करोड डलर थियो । ४० करोड डलर नित्य कमाइ ! धेरै तेलका कुवाहरूका मालिक पनि थिए उनी । उनले केही नगरे पनि साँझमा उनको सेक्रेटरी आएर खबर दिन्थे– 'आज ४० करोड डलर तपाईंको खातामा जम्मा भयो ।' तपाईंलाई थाहा छ त्यस्ता धनाढ्यको छोराले के गरे ? बत्तीस वर्षको उमेरमा सबैथोक छोडेर संन्यास ग्रहण गरे र मन्दिरमा गएर साधु बने । जसको कमाइ ४० करोड डलर नित्य थियो, उनले सबै थोक छोडिदिए । उनले भने– 'यी सबै कुराबाट केही फाइदा छैन । जब मेरो बुबाले आफूसँग केही लान सक्नुभएन भने मैले के लैजान सक्छु ? बुबा आफ्नो बाटो हिँड्नुभयो, म आफ्नै बाटो हिँड्छु ।'

यति ठूलो त्याग तपाईं हामीले शायदै गर्न सक्छौं होला । जिन्दगीमा सबैथोक गरेर पनि हामी ४० करोड

**बुद्धिमान् यसकारण ठानेका छौं कि जीवनमा आफूले धेरै उतारचढाव भोगियो, पाँच छोरा जन्माइयो । मेरो साथमा धन छ, घर छ । यस्तो अवस्थामा खुशी रहन्छ व्यक्ति, त्यही मृगतृष्णामा आफूलाई धेरै प्रसन्न राखेका हुन्छन् मानिसले ।**

कमाउन सक्दैनौं भने उसले त केही नगरी दैनिक ४० करोड कमाउँथ्यो । तर पनि सबै थोक दान गरे । यहाँसम्म कि आफ्नो घर पनि चर्चलाई दान गरे । कहीं पुस्तकालय बनाइदिए, कहीं अस्पताल, कहीं ट्रष्ट बनाएर गरीबहरूलाई दान दिए । उनी भन्थे– 'मलाई त केही पनि चाहिँदैन, केवल दुईवटा रोटी भए पुग्छ । तपाईं वृन्दावन जानुभयो भने त्यहाँ बाँके बिहारीजीको मन्दिर देख्नुहुन्छ । त्यस मन्दिरबाहिर भिखारीहरू बस्छन् । तीमध्ये ६० प्रतिशत भिखारी करोडपति छन् । तिनीहरूले आफ्ना पत्नी र छोराछोरीलाई, घरलाई त्यागिदिए र केवल यहाँ बसेर बिहारीजीको दर्शन गर्दछन् र मधुकरी भिक्षाद्वारा जीवनयापन गर्दछन् । मधुकरी भिक्षाको अर्थ हुन्छ– मन्दिरभित्रबाट बाहिर आउने भक्तहरूले जे प्रसाद दिन्छन्, चाहे लड्डुको टुक्रा होस् वा पुरी तरकारी होस्, त्यही खाएर जीवनयापन गर्नु । उनीहरू माग्दैनन्, स्वेच्छाले जसले जे दिन्छ, त्यही खान्छन् । हामीलाई पत्तै हुँदैन ती सबै

करोडपति हुन् भनेर किनकि अहिले पनि उनीहरूका पत्नी, छोराछोरीहरू करोडौँको व्यापार गरिरहेका छन् । छोरा गाडी चढेर आउँछ, हात जोडेर बिन्ती गर्छ– तपाईं घर हिँड्नुहोस्, हाम्रो बदनाम भइरहेको छ, यसरी मधुकरी भिक्षाद्वारा जीवनयापन गरेको हामीलाई राम्रो लाग्दैन । तब उनीहरू आफ्ना छोरासँग भन्छन्- 'तिमी जाऊ, जे गर्नुपर्छ गर, हामी यहाँ बिल्कुल सुखी र खुशी छौँ । हामीलाई थाहा छ जीवनको बाटो के हो भनेर ।'

के उनीहरू हामीभन्दा मूर्ख, गएगुज्रेका हुन् त ? होइन, ती सबै बुद्धिमान् हुन्, त्यसैले उनीहरू सबै करोडपति बने । तर त्यसपछि पनि उनीहरूले बल्ल बुझे जीवन त्यो होइन रहेछ । यो जीवन त नश्वर छ र अर्को जीवन मात्र आनन्ददायक छ ।

मधुकरीको अर्थ हुन्छ नमागीकन जे प्राप्त हुन्छ त्यही खानु । एक टुक्रा भए पनि, एक मुठ्ठी भए पनि जे प्राप्त हुन्छ त्यति खाँदै केवल भगवान् कृष्णको नाम लिएर जीवनयापन गर्दछन् । गुरु गोरखनाथ भन्नुहुन्छ– 'जीवनको सार यही हो । तपाईं कुन बाटोमा हिँडिरहनुभएको छ ? यदि तपाईं हिँडेको बाटो गलत छ भने अहिल्यै फर्किहाल्नुस् किनकि अहिले त समय छ र अगाडिबाट पछाडि फर्कन अत्यन्त पीडादायी हुन्छ किनकि विषयभोग घट्दैन । यो विषयभोगलाई छोड्नु अत्यन्त कठीन हुन्छ ।

विषयवासनाको अर्थ मृगतृष्णा हो, झूटो सुख हो र वासना हो । साठी प्रतिशत मानिसहरू भन्छन् कि मृगतृष्णा झूटो हो, यो त मसँग हिँड्दैन, यसको मेरो जीवनमा कुनै उपयोग नै छैन, यो त केवल देखावटी हो, मेरो जीवनमा म कारमा चढुँ वा साइकलमा, व्यक्तिहरूले के गर्छन् ?

व्यक्तिहरूले गुरु गोरखनाथलाई के भने, कबीरलाई के भने, रामलाई के भने वा कृष्णलाई के भने ? उहाँहरू जीवनमा अद्वितीय बन्नुभयो र जनक पनि अद्वितीय बन्नुभयो । यसकारण यो भोगमय जीवनलाई त्यागमय जीवन बनाउनका लागि गुरुका शब्दहरूको सहारा लिनुपर्दछ । बाटो त त्यही हुन्छ जुन मैले भनिरहेको छु । तपाईंहरू हिँड्नुहोस् वा नहिँड्नुहोस् यो मेरो ड्युटी होइन । मेरो ड्युटी त केवल यही हो कि आफ्ना शब्दहरूबाट तपाईंहरूलाई गतिशील गरुँ । तपाईं गतिशील हुनुहुन्न त यो तपाईंको न्यूनता हो । गुरुको न्यूनता होइन । साढे चार वर्षको उमेरमा मलाई यो बाटोमा अग्रसर गराइएको थियो र आजसम्म यो कार्यलाई समातिरहेको छु र कुरा रह्यो समाज परिवर्तनको । समाजलाई त रामले पनि परिवर्तन गर्न सक्नुभएन, कृष्णले पनि सक्नुभएन- पाण्डव र कौरव जस्ताको तस्तै रहे । बुद्धले पनि समाजलाई परिवर्तन गर्न सक्नुभएन, यसलाई महावीरले पनि परिवर्तन गर्न सक्नुभएन ।

तर केही व्यक्ति जो परिवर्तित भए, उनीहरुले बुद्धधर्मलाई पूरै विश्वमा फैलाए । केवल २० भिक्षुक थिए बुद्धसँग र उनीहरूले बुद्धधर्मलाई १८ देशमा फैलाए । शंकराचार्यसँग केवल १२ शिष्य थिए, उनीहरूले शंकराचार्यलाई जीवित अमर बनाइदिए, रामकृष्ण परमहंसका केवल एक शिष्य

**रकफेलरको दैनिक आम्दानी ४० करोड डलर थियो । ४० करोड डलर नित्य कमाइ ! धेरै तेलका कुवाहरूका मालिक पनि थिए उनी । उनले केही नगरे पनि साँझमा उनको सेक्रेटरी आएर खबर दिन्थे– 'आज ४० करोड डलर तपाइँको खातामा जम्मा भयो ।' तपाईँलाई थाहा छ त्यस्ता धनाढ्यको छोराले के गरे ? बत्तीस वर्षको उमेरमा सबैथोक छोडेर संन्यास ग्रहण गरे र मन्दिरमा गएर साधु बने । जसको कमाइ ४० करोड डलर नित्य थियो, उनले सबै थोक छोडिदिए । उनले भने– 'यी सबै कुराबाट केही फाइदा छैन । जब मेरो बुबाले आफूसँग केही लान सक्नुभएन भने मैले के लैजान सक्छु ? बुबा आफ्नो बाटो हिंड्नुभयो, म आफ्नै बाटो हिंड्छु ।'**

थिए विवेकानन्द र उनले रामकृष्ण परमहंसलाई जीवित बनाइदिए। हजारौं व्यक्तिहरूको भीडबाट जीवनयापन गर्नुहुन्न गुरुले । गुरुले केवल बाटो देखाउन सक्नुहुन्छ। यदि म तपाईंको बीचमा बसिन भने त तपाईंलाई बाटो देखाउनै सक्दिन । तपाईंको लागि बाटो बनाउन सक्दिन । जंगलमा गएर बसेर त तपाईंलाई बाटो देखाउन सक्दिन, त्यहाँ त म आफ्नै साधना गर्न सक्छु । त्यो आफैमा एकान्तबास हो, त्यो आफैमा पलायनता हो, त्यो आफैमा भाग्नु हो ।

गुरु गोरखनाथ भन्नुहुन्छ कि जीवनमा तपाईंलाई बाटो मिल्यो भने तपाईं त्यहाँबाट परिवर्तन हुनुहोस् र फर्कनुहोस् र फर्कनु धेरै कठीन हुन्छ किनकि व्यक्तिले तपाईंलाई तान्नेछन्, रोक्नेछन् र भन्नेछन् किन तपाईं कहाँ जाँदै हुनुहुन्छ ? हामी कसको भरोसामा बाँच्ने ? फेरि मेरो के हुन्छ ? छोरो कराउला, आमा कराउनुहोला, भाइ कराउला, बहिनी कराउली । समाजले पनि भन्नेछ कि त्यो मूर्ख छ, सबैले नकारात्मक सोचाइ दिनेछन् । सकारात्मक सोचाइ केवल उसको मनले दिन सक्छ ।

**तस्मै मनः शिव संकल्पमस्तु**

मनको संकल्प शक्तिले उसलाई प्रेरणा दिन्छ कि मलाई यो जीवन व्यतीत गर्नुछ र पछि जे होला । समुद्रमा हामफालिएको छ, डुब्नु नै छ त जाऊँ अहिले नै, चालीस वर्षपछि होइन । जब डुब्नु नै छ त अहिल्यै डुबौं । त्यहाँ काठको चितामाथि डुबिन्थ्यो भने यहाँ गुरुरूपी समुद्रमा डुबिनेछ । अन्तर यति हो ।

हेर्नेछु यो बाटोमा हिँडेर पनि । या म सर्वोच्चता प्राप्त गर्नेछु या फेरि डुब्नेछु । डुब्नु त निश्चित नै छ त्यसलाई तपाईं रोक्न सक्नुहुन्न । यसकारण गुरु गोरखनाथले भन्नुभएको छ कि तपाईं बिस्तारै-बिस्तारै त्यागमय जीवन शुरु गर्नुहोस् र विषयभोगलाई पनि त्यत्तिकै रूपमा छोड्दै रहनुहोस् । छोड्दा पनि त्यति छिटो छुट्दैन किनकि विषयवासनाले तपाईंको पूरै घडा भरिएको छ । तपाईं त्यसमा धेरै त्याग गर्नुहुन्छ त थोरै घडा खाली हुन्छ विषयवासनाबाट । तपाईं १२ दिन खाली गर्नुहोस्, १३ दिन खाली गर्नुहोस्, बिस्तारै-बिस्तारै विषयवासनाबाट हटेर त्यागमय जीवनमा उभिनुहोस् । धेरै कठीन छ त्यस बाटोमा हिँड्न र मनुष्य नै बढ्न सक्छन्, हिम्मतिला नै बढ्न सक्छन्, श्रेष्ठजन नै बढ्न सक्छन्, अद्वितीय व्यक्ति नै बढ्न सक्छन् त्यसतिर । कायर र कमजोर बढ्न सक्दैनन्, मरेकाहरू बढ्न सक्दैनन्, रुन्चेहरू बढ्न सक्दैनन्, अकर्मण्यहरू यसो गर्न सक्दैनन् ।

एउटा कमजोर व्यक्तिले राजपाठ छोडेर संन्यास लिन सक्दैन बुद्धले जस्तै । कमजोर, कायरहरूका लागि संसार होइन, उनीहरूका लागि केवल मृत्यु लेखिएको हुन्छ किनकि प्रत्येक दिन मर्दछन् तिनीहरू, श्रीमतीले गाली गर्दछिन्, हप्काउँछिन्, छोराले गाली गर्छ, छिमेकीले गाली गर्छन्, व्यापार चलेन भने दुःख र विषाद् हुन्छ, निद्रा नलागेर दुःख हुन्छ, यी सबै मृत्यु हुन् । हरक्षण मृत्युलाई प्राप्त हुन्छन् र मृत्युको बाटोमा हिँड्दै आफ्नो प्राणको अन्तिम श्वास लिन्छन् ।

त्याग एउटा आनन्दको बाटो हो । तपाईं मरे पनि ती सबैको जीवन त चल्छ नै । तपाईं त मोहग्रस्त हुनुहुन्छ कि म छु र त संसार चलिरहेको छ । यो सबैभन्दा ठूलो अहंकार, सबैभन्दा ठूलो न्यूनता हो जीवनको र सबैभन्दा ठूलो अशिक्षा हो ।

त्यस मार्गमा बढ्नको लागि निश्चयको सबैभन्दा ठूलो आवश्यकता पर्दछ र यो सबैभन्दा ठूलो र कठीन कार्य हो । संसारको तृष्णालाई पनि मैले देखेको छु । मैले अनुभव गरिसकेको छु कि त्यस तृष्णाबाट केही प्राप्त हुँदैन । त्यसबाट केवल लडाइँ, झगडा प्राप्त हुन सक्छ । यो तृष्णा मसँग हिँड्न

सक्दैन । मसँग कुनै कुरा हिँड्न सक्छ भने मेरो ज्ञान हिँड्न सक्छ, मेरो त्याग हिँड्न सक्छ । मैले जीवनमा जे गरेँ, जुन बाटोमा हिँडेर ज्ञान दिएँ, चिन्तन दिएँ, संन्यास जीवन बाँचेँ, ती मसँग हिँड्छन्, ती समाप्त हुँदैनन् । मेरा ग्रन्थ हिँड्छन्, ती समाप्त हुँदैनन् । मेरा ग्रन्थ नाश हुँदैनन्, मेरा विचारधारा समाप्त हुँदैनन् । गुरु गोरखनाथ भन्नुहुन्छ कि जीवन यही हो । यसका लागि कठीन बाटो छान्नु जरुरी छ र कठीन बाटोको अर्थ हो कि त्याग गर्नु जरुरी छ– दिनको, समयको, धनको र आफ्नो जीवनको । यसमा मनबाट नै त्याग हुन सक्छ, शरीर त्याग गर्नु आवश्यक छैन तपाईंले । त्यागको अर्थ हो कि तपाईं बिस्तारै-बिस्तारै तृष्णाबाट टाढा भई त्यहाँ जोडिनु छ । कहाँ जोडिनु छ ? इमान्दारी र कर्तव्यनिष्ठासँग जोडिनु छ र तृष्णाबाट पर हट्नु छ । बिस्तारै हट्नुहोस्, यता बारम्बार जोडिनुहोस् । बारम्बार मनमा त्यस ज्योतिलाई बालिराख्नुहोस् कि मलाई त्यस बाटोमा गतिशील हुनु छ किनकि यी सबै यहीं रहन्छन्, यिनीहरू मसँग जाँदैनन् । यिनीहरू जाँदैनन् त बेकार यिनीहरूका लागि किन दुःखी हुनु ? तपाईं हेर्नुहोस्, पत्नीलाई खान नदिनुहोस् र कपडा नदिनुहोस् । उनले गाली गर्छिन् कि कस्तो व्यक्ति हौ तिमी ? एकदम गएगुज्रेको व्यक्ति हौ, खान पनि दिन सकेनौ मलाई । दुई दिन पहिले धेरै खुशी थिइन् तपाईंसँग, तर आज तपाईंलाई नै गाली गर्न थालिन् ।

समाजले तपाईंलाई धेरै राम्रो मान्छे भन्छ तर २० दिन तपाईं

*बुद्ध धर्मलाई पूरै विश्वमा फैलाइदिए, केही व्यक्तिहरूले । केवल २० भिक्षुक थिए बुद्धसँग र उनीहरूले बुद्ध धर्मलाई १८ देशमा फैलाए । शंकराचार्यसँग केवल १२ शिष्य थिए, उनीहरूले शंकराचार्यलाई जीवित अमर बनाइदिए, रामकृष्ण परमहंसका केवल एक शिष्य थिए विवेकानन्द र उनै शिष्यले रामकृष्ण परमहंसलाई जीवित बनाइदिए । हजारौँ व्यक्तिहरूको भीडबाट जीवनयापन गर्नुहुन्न गुरुले ।*

केही नगर्नुहोस् केवल मन्दिरमा गएर बस्नुहोस् त, त्यही समाजले तपाईंलाई भन्नेछ कि यो त साह्रै घटिया गएगुज्रेको मान्छे हो । यस्तो पनि मान्छे हुन्छ, यो त गधा हो । २० दिन अगाडि तपाईंको प्रशंसा गर्नेहरू नै २० दिनपछि तपाईंको निन्दा गर्न थाल्छन् । त्यसकारण उनीहरू तपाईंको पक्षमा कसरी हुन सक्छन् ? २० दिन पहिले तपाईंको पक्षमा र २० दिनपछि तपाईंको विपरीत ! यो कसरी भयो ?

तपाईं जे गर्नुहोस्, समाजले निन्दा नै गर्दछ । तर गुरुले तपाईंलाई हृदयमा लगाउनुहुन्छ, चाहे फाटेको लुगा लगाएर आउनुहोस् वा राजसी वस्त्र लगाएर आउनुहोस् किनकि गुरु तपाईंको हुनुहुन्छ, गुरुको शब्द, चिन्तन, धारणा शक्ति तपाईंको हो । तर यसका लागि त्यागलाई अपनाउनै पर्छ । त्याग पनि गर्ने र विषयभोग पनि प्राप्त गर्न चाहने भने यो सम्भव हुँदैन, दुवै चीज सँगै हिँड्न सक्दैन । एउटै चीज हिँड्छ । त्यसका लागि फेरि तपाईंले समयको त्याग गर्नै पर्दछ अथवा थोरै धन त्याग गर्नैपर्छ किनकि त्यो धन तपाईं असल कार्यमा खर्च गर्दै हुनुहुन्छ ।

समय पनि धन हो, काम गर्नु पनि धन हो, कर्तव्यनिष्ठता पनि धन हो, परिश्रम पनि धन हो । धन केवल रूपैयाँ मात्रै हुँदैन, तपाईंले गुरुका लागि आधा घण्टा कार्य गर्नुभयो भने यो पनि धन नै हो, एउटा पूँजी हो जसलाई तपाईंले खर्च गर्नुभयो । गुरुसँग रहेर बिहान उठ्नु, स्नान गर्नु, भगवान्‌को पूजन गर्नु यो एउटा उच्चता हो ।

जुन समयमा तपाईंले रक्सी पिउनुभएन, अनावश्यक कुरा बोल्नुभएन, फिल्मका गीतहरू सुन्नुभएन, यो समयमा तपाईंले तल्लो स्तरको काम गर्नुभएन– यो पनि एउटा जीवन हो, यसको मूल आधार त्याग हो, इमान्दारी हो, मूल आधार यो बाटोमा गतिशील हुनु हो जुन बाटोमा गुरुका शब्दहरू छन् र मूल आधार त्यसको लागि प्रयत्नशील बन्नु हो जुन त्यागमय जीवन हो । यदि तपाईं यसो गर्न सक्नुहुन्न त तपाईंजस्तो तल्लो स्तरको मानिस कोही पनि हुँदैन, तपाईं आफैले आफैलाई घमण्डले महान् भन्न भने सक्नुहुन्छ ।

सेठ किसनलालजी धेरै महान् छन् । दिल्लीको चाँदनी चोकमा उनको पसल छ । आज मानिसहरू उनको प्रशंसा गरेर थाक्दैनन् । तर मेरो दृष्टिमा त्यो त्याग होइन किनकि जब उनको मृत्यु हुन्छ, त्यसपछि उनलाई जलाएर व्यक्तिहरू फर्कनेछन्, तब उनीहरूको शब्द के हुन्छ, थाहा छ ? 'बडो चोर थियो, चोरी गरेर चार-चारवटा पसल थापेको थियो, एक नम्बरको बेइमान थियो, आखिर मर्नु नै थियो त्यसलाई । केही गरेको थिएन, त्यसले कुनै धर्मशाला बनाएन, हातबाट सुको झर्दैनथ्यो..।' त्यसको दुई क्षणपछि तपाईं व्यक्तिहरूको धारणा सुन्नुहोस् । यी सबै तपाईं आफ्नै आँखाले हेर्नुहोस् । जाने समयमा त राम नाम सत्य छ भन्दै हिँड्छन् र आउने समयमा गाली किन गरिरहेका छन् ? राम नाम सत्य छ– सबै बिर्सेर ती आलोचना गर्ने व्यक्तिहरू पनि गएर चोरी, झूट, बेइमानीका काम नै गर्न थाल्छन् । तपाईंहरू पनि त्यही गर्दै हुनुहुन्छ । यदि तपाईं त्यस बाटोमा हिँड्दै हुनुहुन्छ जहाँ त्याग, समय र धनको त्याग, इमान्दारी, कर्तव्यनिष्ठता छन् भने यो तपाईंको कार्य हो र जीवनमा पूर्णतातर्फ अग्रसर हुने क्रिया हो । गुरु गोरखनाथ भन्नुहुन्छ– 'जीवनको मूल धर्म, मूल चिन्तन, मूल विचारधारा, मूल सत्य यही हो र बिना गुरु सेवा यी चीज प्राप्त हुनै सक्दैनन् । सेवा बिना गुरु प्राप्त हुनै सक्दैन ।'

बेइमानीबाट कार, मोटर, घर, सम्पत्ति पाउन सकिन्छ तर गुरु प्राप्त हुन सक्दैन । बजारबाट पैसा खर्च गरेर एउटा सुन्दर कार वा कपडा किन्न सक्नुहुन्छ तर तपाईंले गुरुलाई किन्न सक्नुहुन्न । गुरुले नै तपाईंलाई त्यस कार्यमा गतिशील गुर्नहुन्छ । कार, पजेरोबाट त्यस बाटोमा गतिशील हुन सकिँदैन । गुरु तपाईंको बन्धनमा हुनुहुन्न तर कार तपाईंको हो, कारलाई तपाईं जता मोड्नुहुन्छ त्यतै जान्छ । गुरुले त भन्नुहुन्छ– 'तपाईं गलत गर्दै हुनुहुन्छ, सही बाटो त यो हो । तपाईं गल्ती गर्नोस्, त्यो तपाईंको खुशी । तर साँचो बाटो यो हो । यो बाटोमा हिँड्नुहुन्छ भने तपाईं अद्वितीय

**'आज मैले चोरी गरेँ, बदमासी गरेँ, बेकारमा समय बरबाद गरेँ, आज कुनै त्याग गर्न सकिनँ, गुरुको शब्दलाई लागू गर्न सकिनँ, आज म त्यो बाटोमा हिंड्न सकिनँ जहाँबाट पूर्णता प्राप्त गर्न सकिन्छ' यस्तो भावना हरक्षण तपाईँले गर्नुपर्छ र कर्तव्यनिष्ठ हुनुपर्छ । जब तपाईँ यसो गर्नुहुन्छ, तब एउटा क्षण यस्तो आउँछ कि तपाईँको मन शुद्धतातर्फ अग्रसर हुन्छ । यसैलाई जीवन भनिन्छ ।**

बन्नुहुनेछ ।'

'म तपाईंको हात समात्छु, यो मेरो जिम्मेवारी हो । म त्यस ठाउँमा तपाईंलाई पुऱ्याउँछु, यो मेरो धर्म हो र त्यहाँ गएर नै तपाईंले पूर्णता पाउनुहुनेछ, त्यहाँ गएर नै तपाईं अद्वितीय बन्न सक्नुहुन्छ ।' तर त्यसमा तपाईंको देखावटीपन हुनु हुँदैन, प्रदर्शन हुनु हुँदैन । केवल चरणस्पर्श गरेर फूलको माला लगाउँदैमा तपाईंको काम बन्दैन । तपाईंको त्याग छ भने त आफै देखिन्छ । तपाईंले कति कार्य पूरा गर्नुभएको छ भन्ने कर्तव्यनिष्ठता तपाईंको आँखैमा झल्किनेछ । यो महत्त्वपूर्ण पक्ष छ कि तपाईं यस बाटोमा कति हिँडिरहनुभएको छ, तपाईंले कति गुरुकार्य गर्नुभएको छ, तपाईंले यो अन्धकारमा कतिवटा दीयो बाल्नुभएको छ ।

गुरु गोरखनाथ भन्नुहुन्छ– यो जीवनको सत्य हो र त्यो जीवनको असत्य हो । यी दुवैबीच तपाईं उभिनुभएको छ । तपाईं कुन बाटोमा हिँड्ने हो त्यो सबै तपाईंकै हातमा छ । तपाईंको मन, चिन्तन र समाजले बारम्बार विषयभोगतर्फ नै तपाईंलाई धकेल्छ, सत्य मार्गतर्फ लाग्न दिँदैन । यस मार्गमा हिँडिहाल्नुभयो भने पनि मानिसहरूले तपाईंको हातखुट्टा समातेर तान्नेछन्, फर्काउन खोज्नेछन् । हातखुट्टामा कति तागत छ, त्यो तपाईंमा निर्भर हुन्छ ।

आज पनि गुरु गोरखनाथ जीवित हुनुहुन्छ, हाम्रा हजुरबुबा जीवित छन् कि छैनन्, हामीलाई थाहा छैन । जिजुबाजेको नाम मलाई याद छैन, जिजुबाजेको पनि बाजेको नाम त झनै याद छैन । उनीहरु पृथ्वीमा आए र गए– पानीको फोकाजस्तो । फोका उठ्यो, माथि आयो र फुट्यो, सकियो । यही पानीको फोकाजस्तो बन्न चाहनुहुन्छ भने तपाईंको खुशी, विषयवासनातर्फ बढ्न चाहनुहुन्छ भने पनि तपाईंकै खुशी, त्यागमय जीवन बिताउन चाहनुहुन्छ भने पनि तपाईंकै खुशी । त्यसैले पाँच वर्षदेखि बाह्र वर्षको उमेरमा जुन रक्त तपाईंले पाउनुभयो, त्यो शिलामा अंकित भयो । नराम्रा विचार, भावनाबाट आफूलाई बारम्बार टाढा राख्नुहोस् । यो सोच्नुस् कि मैले कर्तव्यनिष्ठतापूर्वक यस क्षणको उपयोग गर्नुछ । यो सबै धनको थुप्रो मेरो अगाडि छ, त्यो त केवल माटो हो । यसबाट मेरो जीवन चल्न सक्दैन । यसले त जीवनमा बेइमानी र चोरी बढाउँछ र चोरीले मेरो मनलाई मलीन गरिदिन्छ । कति कष्टले मैले यो मनलाई सफा गरिरहेको छु, तर फेरि बेइमानीको एक हरफ यसमा लेखिन जान्छ ।

'आज मैले चोरी गरेँ, बदमासी गरेँ, बेकारमा समय बरबाद गरेँ, आज कुनै त्याग गर्न सकिनँ, गुरुको शब्दलाई लागू गर्न सकिनँ, आज म त्यो बाटोमा हिँड्न सकिनँ जहाँबाट पूर्णता प्राप्त गर्न सकिन्छ' यस्तो भावना हरक्षण तपाईंले गर्नुपर्छ र कर्तव्यनिष्ठ हुनुपर्छ । जब तपाईं यसो गर्नुहुन्छ, तब एउटा क्षण यस्तो आउँछ कि तपाईंको मन शुद्धतातर्फ अग्रसर हुन्छ । यसैलाई जीवन भनिन्छ । गुरु गोरखनाथले अत्यन्तै सुन्दर कुरा बताउनुभएको छ– जीवनलाई तिमी कतातिर गतिशील गर्न चाहन्छौ,

**तपाईं जे गर्नुहोस्, समाजले निन्दा नै गर्दछ । तर गुरुले तपाईंलाई हृदयमा लगाउनुहुन्छ, चाहे फाटेको लुगा लगाएर आउनुहोस् वा राजसी वस्त्र लगाएर आउनुहोस् किनकि गुरु तपाईंको हुनुहुन्छ, गुरुको शब्द, चिन्तन, धारणा शक्ति तपाईंको हो ।**

त्यसका लागि तिमीले बराबर सतर्क, सचेष्ट र प्रयत्नशील रहनुपर्छ ।

गुरुसँग जोडिएर, उहाँको शब्दअनुसार हिँडेर आज तपाईं अवश्य त्यस बाटोमा अघि बढ्नुभएको छ । तर यो केवल चार पाइला मात्रै हो । अझै चार माइल हिँड्नुछ र चार पाइलाबाट चार माइलसम्म यात्रा तय गर्ने क्रममा थुप्रै बाधाहरू आउँछन्, ठूलठूला कठिनाइहरू आउँछन् किनकि यी सबैले तपाईंलाई विषयवासनातर्फ तान्नेछन् । तैपनि मेरो मनमा कुनै मलीनता छैन । यो त तपाईंको इच्छा हो, चाहे यो बाटोमा हिँड्नुहोस् वा नहिँड्नुहोस् । मैले बताएको बाटो पूर्णताको हो र अर्को बाटो विषयवासनाको हो, मृगतृष्णाको हो जहाँ तपाईं मेटिनुहुनेछ । त्यहाँ उनीहरूले चितामा जलाएर रुँदै तपाईंलाई बिर्सनेछन् । दुई मिनेट पनि रुने छैनन् । यहाँसम्म कि श्मशानबाट घर आउँदा पनि नरोइकन आउनेछन् । पाँच मिनेट हुँ हुँ गर्छन् र फेरि कुरा गर्न थाल्छन् । ठीकै छ, पिताजी हुनुहुन्थ्यो, छोडेर जानुभयो, अब सबै हामीले सम्हाल्नुपर्छ । उनले

व्यापारमा पनि तपाईंलाई बेइमानीकै बाटो देखाइदिए, 'कपडा बेच्दा आधा इञ्च कम च्यात्नू, दिनभरिमा पाँच मिटर कपडा बच्यो भने पनि पाँच सय रूपैयाँ बच्छ' । बुबाले तपाईंलाई बिलकुल सही सिकाउनुभयो र तपाईं पनि त्यही बाटोमा अघि बढ्दै जानुहुन्छ र आफ्नो सन्तानलाई पनि कर्तव्यपथबाट हटाइदिनुहुन्छ ।

गुरु गोरखनाथ भन्नुहुन्छ यो हाम्रो जीवनको कस्तो घटियापना हो । हामी कति घटिया जीवन बाँचिरहेछौँ । हामी राम्रो जिन्दगी जिऔँ र आजैदेखि यो शपथ लिऔँ कि म राम्रो जीवन जिउनका लागि त्यागमय जीवनलाई अपनाउँछु, चाहे महिनामा चार दिन होस् वा छ दिन वा तीसै दिन ।

यो जीवन हो, यो आनन्द हो, तपाईं हेर्नुहोस् कि यो आनन्दमा कति रस प्राप्त हुन्छ, तृप्ति मिल्छ, कति पूर्णता र कति सफलता मिल्छ । तपाईं स्वयं अगाडि बढेर आफ्नो इच्छा, चिन्तन र धारणा व्यक्त गर्नुहुन्छ भने मात्रै यो जीवन श्रेष्ठ र त्यागमय हुन सक्छ । भनेर, बोलेर मात्रै केही हुन सक्दैन । गुरु गोरखनाथ भन्नुहुन्छ कि जीवनको सत्य नै यही हो जुन प्रत्येक मानवको लागि आवश्यक छ । यदि रकफेलर यसो गर्न सक्छन्, यदि बुद्ध र महावीरले यस्तो गर्न सक्छन् भने तपाईं पनि गर्न सक्नुहुन्छ तर आवश्यकता छ भने केवल दृढ निश्चयको, संकल्प शक्तिको । रकफेलर त केवल केही वर्ष पहिले नै थिए भने बुद्ध त पच्चीस सय वर्ष अगाडिको कुरा हो । मैले त्रेतायुगदेखि आजसम्मको कुरा बताएँ । हाम्रो नाम युगौँसम्म याद रहोस् भनेर त्यसको लागि ढुङ्गामा नाम कुँदाएर मात्र काम हुन सक्दैन, देखावटीपनले काम हुन सक्दैन । यसको लागि त मनको स्लेट सफा गर्नुपर्छ र जीवनमा बिना देखावटीपन त्यागमय बन्न सक्नुपर्छ र यही क्रियालाई नै मनुष्यत्व भनिन्छ जुन मनुष्यत्व तपाईंलाई प्राप्त होस्, यस्तो बाटोमा तपाईं हिँड्न सक्नुहोस्, यस्तो अद्वितीय र श्रेष्ठतम् बन्न सक्नुहोस् ताकि म छाती फुलाएर गर्वले भन्न सकुँ कि यिनीहरू मेरा शिष्य थिए र आज पनि छन् । सायद तब मेरो आँखामा प्रसन्नताको लहर व्याप्त हुनेछ । तर तिमी सोच्छौ कि विषयवासना या पैसा कमाउनु नै जीवनको लक्ष्य हो । पैसा कमाउनु जीवनको लक्ष्य होइन, पैसाको माध्यमबाट आनन्द प्राप्त हुनुपर्छ, यो आवश्यक छ । तर पैसा वा विषयभोगबाट आनन्द प्राप्त हुनै सक्दैन किनकि तपाईंलाई त्यस पैसाको चिन्ताले सधैँ नै सताइरहन्छ कि कसरी बदमासी गरुँ, कसरी अझ बढी कमाउँ, त्यसैले कमाएको पैसाको उपयोग गरेर त्यसको सुख तपाईं लिनै सक्नुहुन्न ।

जसले अँगार खान्छ, त्यसले कालो नै ओकल्छ । यदि तपाईं पनि छलकपटले पैसा कमाउनुहुन्छ भने तपाईंकै पुत्र कुपुत्र हुनेछ, तपाईं नै रोगी हुनुहुनेछ, श्रीमती बिरामी हुनेछिन् । घरमा लडाइँझगडा हुन सक्छ र त्यसरी कमाएको दुई चार लाख रूपैयाँ छातीमा राखेर तपाईं जिन्दगी त पार लगाउन सक्नुहोला, तर आनन्द प्राप्त गर्न सक्नुहुन्न ।

पैसाले तपाईं दश हजार पर्ने पलङ्ग किन्न सक्नुहोला तर निद्रा किन्न सक्नुहुन्न । पैसाबाट भोजन किन्न सक्नुहोला तर भोक किन्न सक्नुहुन्न । त्यसैगरी पैसाबाट तपाईं सुख प्राप्त गर्न सक्नुहोला तर आनन्द प्राप्त गर्न सक्नुहुन्न । एयरकण्डीसनबाट सुख प्राप्त हुन सक्ला तर आनन्द होइन । पैसाको माध्यमबाट तपाईंको जीवनको तनाव हट्न सक्दैन । यदि तनाव मेटिन्थ्यो भने आज हजारौँ पश्चिमाहरू हिमालयतिर घुम्न किन आउँछन् ? किनकि तिनीहरूलाई धेरै तनाव छ । पैसा त धेरै छ तर तनाव पनि धेरै छ । तिनीहरू मथुरा जान्छन्, हिमालय जान्छन् । समुद्रको किनारमा उभिरहन्छन् तर यसरी बाहिरी क्रियाकलापबाट तनाव हट्न सक्दैन । कहीं घुम्लान् तर घुम्नाले मात्र आनन्द प्राप्त हुन सक्दैन ।

तनाव हट्न सक्छ भने केवल तपाईंको भित्री भावना र विचारले हट्न सक्छ । एकचोटि तपाईं निश्चय गर्नुहोस् कि म ठीक त्यसप्रकारको व्यक्ति हुँ

*मैले बताएको बाटो पूर्णताको हो र अर्को बाटो विषय वासनाको हो, मृगतृष्णाको हो जहाँ तपाईं नामेट हुनुहुनेछ । त्यहाँ उनीहरूले चितामा जलाएर रुँदै तपाईंलाई बिर्सनेछन् । दुई मिनेट पनि रुने छैनन् । यहाँसम्म कि मसानबाट घर आउँदा पनि नरोइकन आउनेछन् । पाँच मिनेट हुँ हुँ गर्छन् र फेरि कुरा गर्न थाल्छन् । ठीकै छ, पिताजी हुनुहुन्थ्यो, छोडेर जानुभयो, अब सबै हामीले सम्हाल्नुपर्छ ।*

जो सिनेमाहलभित्र पचास रूपैयाँको टिकट लिएर भित्र बसेको छु र मलाई थाहा छ कि सिनेमा सकिएपछि बाहिर निस्कनैपर्छ । तसर्थ तपाईं सिनेमाको पात्र नबन्नुहोस्, अङ्ग नबन्नुहोस् । पत्नी आफ्नै ढङ्गबाट कार्य गर्छिन्, छोराहरू आफ्नै तरीकाले गर्छन् । संसारमा कोही खलनायक बनेका छन्, कोही नायक बनेका छन्, कोही कुटपिट गरिरहेका छन् तर तपाईं केवल बसेर हेरिराख्नुहोस् । आनन्द प्राप्त गर्ने तरीका अलग छ । आनन्द तब प्राप्त हुन सक्छ जब तपाईं जीवनमा त्यागमय बन्न सक्नुहुन्छ । यसकारण गुरु गोरखनाथ भन्नुहुन्छ कि जीवनमा तृष्णाको कुनै अन्त्य छैन । जीवनमा प्रकृतिले मनुष्यलाई शरीर त धेरै राम्रो दिनुभयो तर त्यस शरीरमा दुई, तीन अन्य कुराहरू पनि हालिदिनुभयो । तीमध्ये एउटा त तृष्णा हो । तृष्णाको अन्त छँदैछैन । लाख रूपैयाँ आउनुपर्छ, फेरि डेढ लाख रूपैयाँ आउनुपर्छ, डेढ होइन दुई हुनुपर्छ । त्यो पनि होइन अढाई लाख हुनुपर्छ । । यदि पाँच लाख, दश लाख छ भने पनि गहुँकै रोटी खान्छ, सुनको टुक्रा त खान सक्दैन । यस्तो त हुँदैन कि ‘गुरुजी, तपाईंसँग सुनको टुक्रा छैन, त्यसैले तपाईं चाहिँ रोटी खानुहोस् र मसँग चाँदीको टुक्रा छ, म चाहिँ त्यही खान्छु ।’ तर तपाईं सुनचाँदी त खान सक्नुहुन्न, खान त गहुँकै रोटी खानुपर्छ । एकपटकमा चारवटा कपडासम्म लगाउन सक्नुहोला, त्यसमाथि अर्को एउटा कोट

केवल आफ्नो विषयवासनालाई छोड्नु आवश्यक छ । आफ्नो छल, झूट र बेइमानीपनलाई त्यागिदिनुस् । तब मात्र जीवनमा परिवर्तन आउन पाउँछ ।

एकपटकमा चारवटा कपडासम्म लगाउन सक्नुहोला, त्यसमाथि अर्को एउटा कोट थप्न सक्नुहोला तर पच्चीसवटा कपडा त लगाउन सक्नुहुन्न । करोडौँ सम्पत्तिको मालिक हुँ भनेर यदि तपाईँ पच्चीसवटा कपडा लगाएर म सानो व्यक्ति होइन भनेर देखाउन खोज्नुहुन्छ भने मानिसहरूले तपाईँलाई ठूलो व्यक्ति होइन, पागल भन्नेछन् । यदि मसँग पचास हजार छ भने पनि म त्यही चारवटै लुगा लगाएर मसान पुग्नेछु र यदि छल, कपट गरेर तपाईँले करोडौँ कमाउनु भए पनि त्यसरी नै मसान पुग्नुहुनेछ । त्यसैले यो केवल भ्रम हो, एउटा झूटो सन्तोष हो कि मैले यति करोड कमाएँ ।

थप्न सक्नुहोला तर पच्चीसवटा कपडा त लगाउन सक्नुहुन्न । करोडौँ सम्पत्तिको मालिक हुँ भनेर यदि तपाईँ पच्चीसवटा कपडा लगाएर म सानो व्यक्ति होइन भनेर देखाउन खोज्नुहुन्छ भने मानिसहरूले तपाईँलाई ठूलो व्यक्ति होइन, पागल भन्नेछन् । यदि मसँग पचास हजार छ भने पनि म त्यही चारवटै लुगा लगाएर मसान पुग्नेछु र यदि छल, कपट गरेर तपाईँले करोडौँ कमाउनु भए पनि त्यसरी नै मसान पुग्नुहुनेछ । त्यसैले यो केवल भ्रम हो, एउटा झूटो सन्तोष हो कि मैले यति करोड कमाएँ । यसबाट तपाईँको रहनसहन वा जीवनमा कुनै फरक पर्दैन । तर त्यो छ महिनामा तपाईँले छल, झूटद्वारा आफ्नो आत्मालाई यति दबाउनुभयो, मनलाई यति धेरै बालुवाले छोप्नुभयो कि त्यहाँ तपाईँको अनुहार देखिन छोड्यो । तपाईँ सोझो हुनुहुन्छ कि दुष्ट हुनुहुन्छ वा इमान्दार हुनुहुन्छ, केही पनि देखिँदैन । बस, तपाईँ तृष्णामा हराइरहनुभएको छ, तृष्णाकै कारण भट्किरहनुभएको छ र भगवान्ले तपाईँको तृष्णालाई हेरिरहनुभएको छ ।

गुरु गोरखनाथ भन्नुहुन्छ कि जब हामी तृष्णा र विषयवासनाबाट टाढा रहन्छौँ तब जीवनमा उच्चता प्राप्ति सम्भव हुन्छ र त्याग हाम्रो प्राचीन परम्पराको एउटा बोध हो जसको माध्यमबाट यदि गुरु गोरखनाथ सफल हुन सक्नुभयो भने, म सफल हुन सक्छु भने तपाईँ पनि अवश्य सक्नुहुन्छ र तपाईँजस्तै अन्य पचासौँ व्यक्ति पनि सफल हुन सक्छन्, यसमा कुनै सन्देह छैन ।

केवल आफ्नो विषयवासनालाई छोड्नु आवश्यक छ । आफ्नो छल, झूट र बेइमानीपनालाई त्यागिदिनुहोस् । तब मात्र जीवनमा परिवर्तन आउन पाउँछ र गुरु गोरखनाथ भन्नुहुन्छ कि तपाईँ यस्तो परिवर्तन गर्न सक्नुहुन्न, तपाईँ बेइमानीपनालाई छोड्नै सक्नुहुन्न भने तपाईँको जीवन त्यस्तै हुनेछ जस्तो एउटा घटिया मानिसको हुन्छ । वास्तवमा तपाईँ मनुष्य तब बन्न सक्नुहुन्छ जब आफ्नो जीवनमा त्यागमय बन्न सक्नुहुन्छ । तब गुरुसँग जोडिन सक्नुहुन्छ, तब साधनाको उच्चतामा पुग्न सक्नुहुन्छ । तब जीवनमा सबै कुरा प्राप्त गर्न सक्नुहुन्छ जुन मानव जीवनको ध्येय हो । तपाईँले यस्तै गर्न सक्नुहोस्, जीवनमा अद्वितीय बन्न सक्नुहोस, श्रेष्ठतम बन्न सक्नुहोस्, गुरु गोरखनाथजस्तै बन्न सक्नुहोस्, म यही कामना गर्दछु र हृदयदेखि नै यही आशीर्वाद प्रदान गर्छु ।

*–सद्गुरुदेव डा. नारायणदत्त श्रीमाली*

# गुरु गोरखनाथ, नेपाल र रोट

सिद्धाश्रम शक्ति केन्द्रले राष्ट्रगुरु श्री श्री महायोगी गुरु गोरखनाथको चरणकमलमा सवालाख रोट अर्पण गर्दै आएको पनि छ वर्ष पूरा भएर आउँदो जेठमा सात वर्ष हुन गइरहेको छ। आगामी जेष्ठ १३ देखि २३ गतेसम्म संस्थाले रोट महोत्सवको आयोजना गर्दैछ जुन सातौँ रोट महोत्सवको रुपमा इतिहासमा अंकित हुनेमा शंका रहन्न। प्रत्येक वर्ष संस्थाले गुरु गोरखनाथको चरणकमलमा किन यसरी रोट अर्पण गर्दै आइरहेको छ भन्ने जिज्ञासा पनि उठ्ने गरेको छ। यस सन्दर्भमा बुझ्नु आवश्यक छ।

रोट अर्पण भूमि अर्पण हो । साङ्केतिकरूपमा रोटलाई नै भूमिको रूपमा अर्पण गरिन्छ । विशेष गरी विषम परिस्थिति सृजना हुँदा त्यसको निदानका लागि, दैवी प्रकोप, राजनैतिक अस्थिरताजस्ता विपत्ति निवारणका लागि, जनकल्याण, आत्मकल्याण, इच्छित वस्तुको प्राप्ति, भक्ति, शक्ति वृद्धिका लागि महायोगी गुरु गोरखनाथको चरणकमलमा रोट चढाउने परम्परा रहिआएको पाइन्छ । पहिलेपहिले जसले जे का लागि, जुन अभिष्ट पूर्तिका लागि गुरु गोरखनाथको चरणकमलमा रोट चढाए पनि सिद्धाश्रम शक्ति केन्द्रले भने विशेष गरेर राष्ट्रोत्थानका लागि नै यस महोत्सवलाई प्रत्येक वर्ष सम्पन्न गरिरहेको छ ।

नेपालको भौगोलिक अवस्थिति, यसको बनौट, यहाँको रीतिरिवाज, संस्कृति, परम्परा विलक्षण छन्, अद्वितीय छन् ।

> दैवी प्रकोप, राजनैतिक अस्थिरताजस्ता विपत्ति निवारणका लागि, जनकल्याण, आत्मकल्याण, इच्छित वस्तुको प्राप्ति, भक्ति, शक्ति वृद्धिका लागि महायोगी गुरु गोरखनाथको चरणकमलमा रोट चढाउने परम्परा रहिआएको पाइन्छ ।

गुरु गोरखनाथलाई प्रत्येक धर्म, सम्प्रदायले विभिन्न स्वरुपमा मानिआएको सन्दर्भमा आफ्ना परम्परा र संस्कृतिभित्रै घसेर पनि सबैले गुरु गोरखनाथलाई स्थान दिएका छन् । के हिन्दु, के मुस्लिम, के इसाई, के बुद्धिष्ट सबैले उहाँलाई विभिन्न स्वरुपमा स्वीकारी मान्दै आइरहेका छन् र उहाँको कृपा, आशीर्वाद, अनुकम्पाले आफ्ना मनोरथहरु पूरा गरिरहेका छन् । नेपालको ऐतिहासिक जिल्ला गोरखाकै कुरा गर्ने हो भने पनि पृथ्वीनारायण शाहले गुरु गोरखनाथकै कृपा, आशीर्वाद पाएर नेपाल राष्ट्रको एकीकरण गर्न सफल भएको प्रसंग आउँछ । पृथ्वीनारायाण शाहले मात्रै होइन, उनका कैयौँ पुस्ताअघिदेखि नै गुरु गोरखनाथको भक्ति गाउने प्रचलन रहिआएको र यसै भक्तिभावले गर्दा नै पृथ्वीनारायण शाहका पूर्खा र अग्रजहरुले आफ्नो मात्रै होइन, राष्ट्रकै कल्याण गरेको इतिहास हाम्रो सामु छ । शान्तिमा होस् वा अशान्तिमा, प्रियमा होस् वा अप्रिय अवस्थामा, सफलतामा होस् वा असफलतामा उहाँकै यशोगान र भक्तिगान गाइएको इतिहास पनि हाम्रो सामु लुकेको छैन । युद्धभूमिमा 'जय गोरख, जय काली'को शंखघोष गर्दै गुरु गोरखनाथकै

'महाप्रसाद' हो ।
चरणकमलमा अर्पित रोट
उच्च सौभाग्य हो । जसले रोट
नै धन्य हुन्छ । त्यो आत्माका युग
नाश हुन्छन् र एउटा जीवले मुक्ति प्र
हुन्छ । तसर्थ महाप्रसाद रोट ग्रहण गर्नाल
फाइदाहरू वर्णनातीत छन् । ३२ थरि मसल
रोटको विशेष महत्त्व हुन्छ । काजु, किसमि
फलादि औषधीय गुणले युक्त छन् । यी व
पनि मिसाइएको पाइन्छ । यिनीहरुका औ
कहिल्यै थाकेको पाइन्न । हामीले घरेलु
आइरहेका छौँ । यिनै जडिबुटीलगायत
रोटको विशेषतालाई शब्दमा भने
यसको महत्त्वलाई आँक्न सकिन्
सेवनका लागि पनि जेठ
अवसरलाई सदुपयो

रोट
। सद्गुरुदेवको
खान पाउनु मानवजीवनको
प्रसाद ग्रहण गर्दछ त्यो आत्मा
युगान्तरका पाप कर्महरू, दोषहरू
प्त गर्नका लागि सजग मार्ग निर्माण
ने हुने शारीरिक, मानसिक र आध्यात्मिक
ा र जडिबुटी मिसाएर बनाइने हुनाले पनि
स, छोहरा, नरिवल, ल्वाङ, सुकुमेल आदि
स्तुहरुलाई विभिन्न आयुर्वेदिक खुराकहरुमा
षधीय गुणहरुका बारेमा बताएर आयुर्वेद
औषधिको रुपमा पनि यिनीहरुलाई लिँदै
को मिश्रणबाट शुद्ध घिउमा तयार हुने
कैद गर्न सकिन्न । सेवन गरेर नै
छ । त्यसैले यस महाप्रसादको
५ १३ देखि २३ गतेको
ग गर्न सकिन्छ ।

भक्ति, यशोगान गाइएबाट नेपाल राष्ट्र अहिलेसम्म विश्वसामु एउटा स्वतन्त्र राष्ट्रको रुपमा रहिरहन सफल रहेकोमा शंका रहन्न, यसमा सबैले गर्व गर्छन् र गर्नुपर्छ। गुरु गोरखनाथ नै ती आराध्यदेव हुनुहुन्छ जसले विभिन्न स्वरुपमा रहेर आज पनि नेपालको रक्षा गरिरहनुभएको छ र गरिरहनुहुनेछ भन्ने कुरामा पनि हामीले गर्व गर्नैपर्ने हुन्छ ।

नेपाल इतिहासको विभिन्न कठीन कालखण्डहरू चाहे त्यो नरेन्द्रदेवको पालामा होस् वा विखण्डित नेपालको एकीकरणमा होस् वा नेपाल अंग्रेज युद्धमा होस् श्री श्री महोयोगी गुरु गोरखनाथको कृपा, आशीर्वाद प्रत्यक्षरूपमा परेको र देशका कठीन परिस्थितिहरू पनि सहज र सरलताका साथ साम्य भएको कुराको प्रमाण आज पनि नेपालको इतिहासमा पाउन सकिन्छ। टुक्राटुक्रामा फुटेको नेपाल एउटै भएपछि थुप्रै उतारचढाए देखा परे। बाह्य हस्तक्षेपहरुका अतिरिक्त अनेकौँ आन्तरिक खिचातानी, कलह, वैमनस्यताले गर्दा देशको स्थिति लथालि जस्तै छ । विभिन्न वाद र सम्प्रदायको नाममा आ-आफ्ना डम्फू बज्दा देश विकराल स्थितितिर, विभाजनतिर, गृहकलहतिर होमिन गइरहेको

आभास सर्वत्र भइरहेको छ । 'भाइ फुटे गँवार लुटे'को दृश्यले सबै अत्तालिएका छन्, विभिन्न राजनैतिक पार्टीहरुको आ-आफ्नै अडान, स्वार्थबाट देशको पतन निश्चितजस्तै भइसकेको छ । कहिले आत्मस्वाभिमानको निहुमा कलह, कहिले प्रान्तीय राज्यको नाउमा विद्रोह त कहिले धर्मको नाउमा अशान्ति मच्चाउनेहरुको बिगबिगी बढिरहेको सन्दर्भमा को राष्ट्रसेवक चुप लागेर बस्न सक्लान्, कसको आङ सिरिङ्ग नहोला ?

त्यसैले सिद्धाश्रम शक्ति केन्द्रले राष्ट्रको गौरव जोगाउन, राष्ट्र बचाउन, यहाँको धर्म, संस्कृतिको रक्षा गर्न, यहाँका मठ-मन्दिरहरुको संरक्षण गर्न, विभिन्न सम्प्रदायहरुको अस्तित्व रक्षाका लागि आफ्नो दायित्वबोधलाई नबिर्सी गुरु गोरखनाथको श्रीचरणकमलमा वर्षेनी सवालाख रोट अर्पण गर्दै आइरहेको छ । आफ्नो दायित्वलाई निभाउन संस्थाले देशमा अमनचयन कायम राख्न, देशको अस्तित्वलाई जोगाइराख्न र विदेशी हस्तक्षेपको भयबाट मुलुकलाई बचाउन सबैभन्दा प्रभावकारी अस्त्रको रुपमा गुरु गोरखनाथको चरणकमलमा रोट अर्पण गर्नुलाई लिएको छ । यो अस्त्र विगतमा धेरै प्रभावकारी भएको तात्कालिक अवस्थाहरुमा आएको परिवर्तनले प्रमाणित गर्दछ । यस क्रमलाई निरन्तरता दिने अभियानमा संस्थाले सातौँ रोट महोत्सवलाई बडो हर्षोल्लास र भव्यताका साथ मनाउन गइरहेको छ । त्यसैले हामी तपाईंहरु सबैलाई आह्वान गर्छौं– जेठ १३ देखि २३ गतेसम्म ऐतिहासिक जिल्ला गोरखाको गोरखगुफा जाऔँ र गुरु गोरखनाथको चरणकमलमा अर्पण गरिने सवालाख रोट महोत्सवमा भाग लिएर यसलाई सफल बनाऔँ, देशको भविष्य निर्माण गरौँ ।

जय गुरुदेव !

2009.05.11 02:47

2009.05.12 21:02

भगवान् श्रीकृष्णले रचना गर्नुभएको

# गोरक्षस्तोत्रराजः



ॐ अस्य श्रीगोरक्षनाथस्तोत्रमन्त्रस्य विष्णु ऋषिः। अनुष्टुप् छन्दः। श्रीगोरक्षनिरञ्जनो देवता। विमला शक्तिः। धर्मार्थकाममोक्षार्थे जपे विनियोगः।

आकाशमन्दिरं चैव, तारारत्नैश्च मण्डितम्।
तस्य मध्ये स्थितो नित्यं, वराभयकराम्बुजः ॥१॥
निरञ्जनो निराकारो, निर्विकल्पो निरामयः।
अगम्योऽगोचरोऽलक्ष्यो, गोरक्षः सिद्धवन्दितः ॥२॥
कौपीनी च परध्यानी, तप्तकाञ्चनसन्निभः।
ध्येयः शिवः परो देवो, जटामुकुटमण्डितः ॥३॥
चिन्तामणिः पुमर्थानां, चन्द्रार्काग्निनित्रिलोचनः।
सिद्धगन्धर्वयक्षेड्यो, देवर्षिगणसेवितः ॥४॥
विमला वामभागे च, निजा शक्तिः परात्मिका।
एवं ध्यात्वा शिवं योगी, बद्धसिद्धासनः सदा ॥५॥
इदं स्तोत्रं पठेन्नित्यं, सर्वसिद्धिफलप्रदम्।
श्रीगोरक्षस्तोत्रराजं, दुर्लभं भुवनत्रये ॥६॥
देवासुरमनुष्याश्च, न जानन्ति महीतले।
सम्यग्ज्ञात्वा स्तुतो देवः, सर्वकामप्रदायकः ॥७॥
श्रीगोरक्ष ! नमस्तुभ्यं, नमस्तुभ्यं सदाशिव !।
सम्पूर्णाय नमस्तुभ्यं, नमो लक्ष्मीप्रियाय ते ॥८॥
सर्वेषामेव जन्तूनां, पापपुण्यविपाकदः।
परं ब्रह्म परं धाम ! श्रीगोरक्ष ! नमोऽस्तुते ॥९॥
गकारो गुणसंयुक्तो, रकारो रुपलक्षणः।
क्षकारेणाक्षयं ब्रह्म, श्रीगोरक्ष ! नमोऽस्तुते ॥१०॥
ब्रह्मणां च परं ब्रह्म, रुद्रादीनां शिरोमणिः।
त्रैलोक्यं निर्मितं येन, श्रीगोरक्ष ! नमोऽस्तुते ॥११॥
क्षमाधारी जितक्रोधः सन्तोषी विजितेन्द्रियः।
धर्माधर्मपरित्यागी, श्रीगोरक्ष ! नमोऽस्तुते ॥१२॥
ब्रह्मचारी सदाशुद्धः, कायकर्मी महातपाः।
आशापाशो हृतो येन, श्रीगोरक्ष ! नमोऽस्तुते ॥१३॥
ज्ञानी धर्मेषु यो लीनः, सत्यवादी दृढव्रतः।
आत्मध्यानरतो नित्यं, श्रीगोरक्ष ! नमोऽस्तुते ॥१४॥
शुभाशुभविनिर्मुक्तो, भावाभावविवर्जितः।
निजभक्ते स्वयं दाता, श्रीगोरक्ष ! नमोऽस्तुते ॥१५॥
नरलोके नराधीशो, नागलोके च नागराट्।
देवलोके च देवेन्द्रः श्रीगोरक्ष ! नमोऽस्तुते ॥१६॥
राजन्यानाञ्च यो राजा, महाराजो महेश्वरः।
महीपति र्महीन्द्रश्च, श्रीगोरक्ष ! नमोऽस्तुते ॥१७॥
समस्तरसभोक्ता यो, यः सदा भोगवर्जितः।
सदा समरसो यश्च, श्रीगोरक्ष ! नमोऽस्तुते ॥१८॥
हठयोगविधाता च, मत्स्यकीर्तिविवर्धनः।
योगिभि र्मनसा गम्यः, श्रीगोरक्ष ! नमोऽस्तुते ॥१९॥
रेचकः पूरकश्चैव, कुम्भक स्त्रोटक स्तथा।
प्राणायाम श्चतुर्धा ते, श्रीगोरक्ष ! नमोऽस्तुते ॥२०॥
ब्रह्मादिश्चैव बिष्णवादी, रुद्रादिश्च सदाशिवः।
ज्योतिर्मयोऽनवच्छिन्नः श्रीगोरक्ष ! नमोऽस्तुते ॥२१॥
सिद्धानाञ्च महासिद्ध, ऋषीणां च ऋषीश्वरः।
योगिनाञ्चैव योगीन्द्रः, श्रीगोरक्ष ! नमोऽस्तुते ॥२२॥
पीठादीनां महापीठं, शिवादीनां महाशिवः।
मन्त्रादीनां महामन्त्रः, श्रीगोरक्ष ! नमोऽस्तुते ॥२३॥
विश्वतेजो विश्वरुपं, विश्ववन्द्यः सदाशिवः।
विश्वनामा विश्वनाथः, श्रीगोरक्ष ! नमोऽस्तुते ॥२४॥

सर्वगुणो गुणाभावो, निर्गुणश्च गुणस्थितः ।
साकारो वा निराकारः, श्रीगोरक्ष ! नमोऽस्तुते ॥२५॥
अनन्तलोकनाथश्च, नाथनाथशिरोमणिः ।
सर्वनाथसमाराध्यः, श्रीगोरक्ष ! नमोऽस्तुते ॥२६॥
विश्वोत्पत्तिकरश्चैव, विश्वेषां प्रतिपालकः ।
विश्वसंहारकर्ता च, श्रीगोरक्ष ! नमोऽस्तुते ॥२७॥
उत्पत्तिस्थितिसंहार, कारिणे क्लेशहारिणे ।
सर्वाधारस्वरुपाय, श्रीगोरक्ष ! नमोऽस्तुते ॥२८॥
पिण्डब्रह्माण्डमध्ये च, भुवनानि चतुर्दश ।
सर्वत्र व्यापको नाथः, श्रीगोरक्ष ! नमोऽस्तुते ॥२९॥
न जानामि कुलं गोत्रं, वर्णावर्णविवर्जित ! ।
लक्ष्यालक्ष्यस्वरुपोऽसि, श्रीगोरक्ष ! नमोऽस्तुते ॥३०॥
नोत्पत्ति र्न लयो नास्ते, विकारो न च बन्धनम् ।
सदा समरसा बृत्तिः, श्रीगोरक्ष ! नमोऽस्तुते ॥३१॥
न माता न पिता चैव, न ते बन्धुः सहोदरः ।
अजः स्वयम्भूः सर्वात्मा, श्रीगोरक्ष ! नमोऽस्तुते ॥३२॥
अदृश्यं दृश्यते नाथ ! अश्राव्यं श्रूयते सदा ।
त्वत्कृपालेशमात्रेण, श्रीगोरक्ष ! नमोऽस्तुते ॥३३॥
सर्वत्र व्यापकः सूक्ष्मो, जीवरुपी महेश्वरः ।
सर्वेन्द्रियमयो नाथ ! श्रीगोरक्ष ! नमोऽस्तुते ॥३४॥
चन्द्रादीनां तथा शैत्यं, सूर्यादीनां त्वमुष्णाता ।
सर्वसारस्वरुपोऽसि, श्रीगोरक्ष ! नमोऽस्तुते ॥३५॥
उत्तमं मध्यमं नीचं, त्वया सर्वं विनिर्मितम् ।
यर्थवाग्निः सर्वरुपः, श्रीगोरक्ष ! नमोऽस्तुते ॥३६॥
अण्डजस्वेदजोद्भिज्ज, जेरजानां त्वमुद्भवः ।
अनन्तकोटिजीवानां, श्रीगोरक्ष ! नमोऽस्तुते ॥३७॥
वायुस्त्व पञ्चरुपेण, प्राणिनां देहधारकः ।
स्वयं सर्वमयो नाथः, श्रीगोरक्ष ! नमोस्तुते ॥३८॥
शून्यानां च परं शून्यं, परेषां परमेश्वरः ।
ध्यायताञ्च परंधाम, श्रीगोरक्ष ! नमोऽस्तुते ॥३९॥
एकाकी वर्तते नित्यं, भवपाशविवर्जितः ।
परं ब्रह्माक्षरं ज्योतिः, श्रीगोरक्ष ! नमोऽस्तुते ॥४०॥
स्वर्गेषु पूज्यते दैवै, मर्त्यलोकेषु मानवैः ।
पाताले नाथलोकैश्च, श्रीगोरक्ष ! नमोऽस्तुते ॥४१॥
त्रिनेत्र स्त्रिपुराराति, स्त्रिवेद स्त्रिजगत्पतिः ।
त्रयीवेद्य स्त्रिदेवात्मा, श्रीगोरक्ष ! नमोऽस्तुते ॥४२॥
सिद्धाम्नायसमाम्नाता, सिद्धाम्नायैकसिद्धिदः ।
सिद्धसङ्घैः सदा सेव्यः, श्रीगोरक्ष ! नमोऽस्तुते ॥४३॥
तेजःपुञ्जः स्वयं देवो दीपो, दीप्तिमतामपि ।
सर्वस्वान्तःस्थितं ज्योतिः, श्रीगोरक्ष ! नमोऽस्तुते ॥४४॥
सर्वासां जीवजातीनां, पापपूण्यैकसाक्षिणे ।
शुभाशुभफलाध्यक्ष ! श्रीगोरक्ष ! नमोऽस्तुते ॥४५॥
श्रीगोरक्षस्तोत्रराजः, स्वयं कृणेन निर्मितः ।
जपतां भक्तिभावेन, सर्वसिद्धिविधायकः ॥४६॥
शिवस्तोत्रं विष्णुकृतं, ब्रह्मणा पठितं पुनः ।
ये पठन्ति सदा भक्त्या, ते लभन्ते समीहितम् ॥४७॥
इदं स्तोत्रं जपेन्नित्यं, सर्वपापैः प्रमुच्यते ।
धनं पुत्रांस्तथा दारां, ल्लभते नात्र संशयः ॥४८॥
मनसा कर्मणा वाचा, स्तोत्रं यः पठते नरः ।
उद्धरे त्सप्त गोत्राणि, कुलान्येकोत्तरं शतम् ॥४९॥
धनवाञ्जायते वंशे, स्तोत्रं यस्य हृदि स्थितम् ।
जन्मजन्मकृतं पापं, नाशमायाति सत्वरम् ॥५०॥
दर्शनं लभते साक्षा, च्छ्रीनाथस्य जस्पतवम् ।
भूर्जपत्रे लिखेत्स्तोत्र, मष्टगन्धेन भक्तितः ॥५१॥
धारयेतकण्ठमध्ये च, यमलोके न पीड्यते ।
स्तोत्रराजं जपे त्प्रात, र्यत्स्वयं हरिणोदितम् ॥५२॥
गोरक्षमक्षयं देवं, मनोवाचामगोचरम् ।
सिद्धनाथं सिद्धसेव्यं, लभते नात्र संशयः ॥५३॥

इति श्रीकल्पद्रुमतन्त्रे श्रीकृष्णविरचितः श्रीगोरक्षनाथस्तोत्रराजः सम्पूर्णः ।

त्रेतायुगमा गुरु गोरक्षनाथ प्रसंग

# भगवान् रामलाई दीक्षा प्रदान

लंका विजयपछि श्रीराम अयोध्यामा आए र केही समयमै राज्य व्यवस्थालाई व्यवस्थित गरे। एकदिन राजमाता कौशल्या, सुमित्रासहित गुरु वशिष्ठसामु उनले सविनय प्रार्थना गरे– हे गुरुदेव ! रावणकुलको ब्रह्महत्याको विमोचनको उपाय बताउनुहोस् । केही समय सोचविचार गरेर वशिष्ठले भने– हे राम ! निर्लोभी सत्यवक्ता ब्रह्मज्ञानी अवधूत महासिद्ध योगी सर्वसमर्थलाई गुरु धारण गरेर गुरुदीक्षा लिनू र महायोग विद्याको सेवन गर्नू । यस सिद्ध योगरूपी अग्निले सबै पापतापलाई दग्ध गरी निर्बीज बनाउँछ । आगोमा तताएको सुवर्णादि धातुलाई आगोले शुद्ध गर्छ एवं महायोगाग्निमा जीवात्माका दुष्कृत दग्ध भएर जीवात्मा परमशुद्ध हुन्छ । तब रामले पुनः मुनिसँग भने– हे प्रभु ! यसबेला उक्त गुणसम्पन्न को हुनुहुन्छ ? कहाँ हुनुहुन्छ ? तब वशिष्ठमुनिले भन्नुभयो– पञ्चाल (पंजाब) देशको पश्चिमोत्तर कोणमा गिरिश्रेष्ठ छ जुन अनन्तकालदेखि श्री शंकरको सदाशिवरूप श्री गोरक्षनाथको पनि परमपावन तपस्थली हो, यहीं परमशिवरूप गुरु गोरक्षनाथ नाम भएको उक्त सर्वविशेषण गुणसम्पन्नभन्दा पनि अधिक अनन्त गुणसम्पन्न रहनुहुन्छ । उहाँ महायोगाचार्य जो सदा निर्भय पर्वाहहीन सर्वसमर्थ साक्षात् परमशिवरूप हुनुहुन्छ, उहाँलाई गएर विधिपूर्वक गुरु धारण गरी योगदीक्षा लिएर तथा योगसिद्ध गरेर पापबाट मुक्त हुन सकिन्छ । यस अतिरिक्त यस महाभयंकर पापका लागि अन्य अधिक केही हुन सक्दैन । वशिष्ठसँग श्रवण गरेर श्री जानकीसहित राम, लक्ष्मण, हनुमानजी चारैले ब्रह्महत्याको भावनालाई लिएर त्यसबाट मुक्ति पाउनका लागि गोरक्षनाथसँग गुरु दीक्षाको उद्देश्यले अयोध्यापुरीबाट शुभमूहुर्त विचार गरेर टिल्लातिर प्रस्थान गरे । त्यो सर्वरत्नका निधि टिल्ला नामको पर्वत पंजाबको पश्चिमोत्तर कोणमा अवस्थित जेहलम नदीको निकट छ । भूमण्डलका मूर्ख बच्चादेखि लिएर प्रौढ विद्वान्को बुद्धिमा पूर्ण विख्यातिका साथ यो टिल्ला स्थित छ । त्यसबेला जहाँसम्म वाहन जान सक्थ्यो त्यहाँसम्म वाहनबाट गएर पुनः हिंडेर टिल्लामा पुगेर हेर्दा रामले देखे कि अनेकौं महासिद्ध योगीहरू, तपस्वीहरू, ब्रह्मज्ञानीहरूबाट सुसेवित एक परम स्वच्छ विविध धातुशिलाबाट निर्मित अनेक रत्नमणिमुक्ताहरूबाट जडित बागम्बर छालाहरूबाट आच्छादित उच्चासनमा आसीन उक्त सिद्धादि मण्डललाई ब्रह्मज्ञान तथा महायोगविद्याको अमृतरूपी उपदेश पान गराइरहनुभएको व्यक्तित्व हुनुहुन्छ । तब यी सबै रचना देखेर रामसहित अन्य तीनजनाले परम सादरपूर्व सविनय विनम्र भावले सर्वांगीण प्रणाम

रामको सविनय वचनलाई सुनेर दयार्द्रित भएर दयार्णव श्री गोरक्षनाथले रामको प्रार्थनालाई स्वीकार गर्नुभयो र उनलाई नाथमार्गमा दीक्षित हुनका लागि आदेश दिनुभयो।

गरे। तदनन्तर प्रचण्ड मार्तण्ड सन्निभ प्रकाश प्रभाव एवं शशीसमशील स्वभावका गुरु गोरक्षनाथजीले आशीर्वादपूर्वक अमृतरूपी मधुर वाणीद्वारा निकटवर्ती परमसुन्दर आसनमा उपविशनको आदेश दिनुभयो। तब अत्यन्तै प्रसन्नतापूर्वक पृथक्‌पृथक् आसनमा सराम आसीन भए। पछि ती चारै जनालाई यथारुचि भोजन पेयादिका लागि पनि सिद्धहरूलाई निर्देश दिएर सादरपूर्वक उपलब्ध गराउनुभयो। यसपछि आरामका लागि उनीहरूलाई परम स्वच्छ विशाल दुईवटा हल उपलब्ध गराउनुभयो। तब भगवान् रामसहित चारैजना केही दिन परम प्रसन्नतापूर्वक निवास गरेपछि एकदिन प्रात:कालको नित्यकृत्यपछि गुरु गोरक्षनाथको नजिक गएर प्रणामपूर्वक आज्ञा पाएर बसे। तब भगवान् रामले पनि आफूलगायत चारैजना आउनुको कारण बताए र विनम्र भावले स्वनिवेद्य निवेदन गर्दै भने– हे प्रभु ! राजा रावणका साथ भएको महायुद्धको हत्याको पाप निवारणार्थ हामी हजूरको चरणारविन्दमा उपस्थित भएका छौं। यस ब्रह्महत्याको निवृत्तिका लागि हाम्रो लागि जे उचित छ, त्यसलाई हे कृपामय ! कृपा गरेर भन्नुहोस् र यथाविधि हामीलाई निर्देश दिएर गराउनुहोस्। हजूरको कृपारूपी दर्शन हाम्रो लक्ष्य हो। यसलाई पूरा गर्न जसरी भए पनि हामीलाई कृपा गर्नुहोस्। तब भगवान् रामको सविनय वचनलाई सुनेर दयार्द्रित भएर दयार्णव श्री गोरक्षनाथले रामको प्रार्थनालाई स्वीकार गर्नुभयो र उनलाई नाथमार्गमा दीक्षित हुनका लागि आदेश दिनुभयो। उहाँले भन्नुभयो– सिद्ध योगको प्रज्जलित योगज्वालाबाट समस्त पापताप आदि विकार दग्ध भएर जीवस्वरूप परमशुद्ध कुन्दन हुन जान्छ। चारैले तुरुन्तै नाथमार्ग अपनाउन स्वीकृति दिए र भने– हजूरले हामीलाई दीक्षा शिक्षा दिएर कृतार्थ गर्नुहोस्। जुन महायोग क्रिया गर्नाले समस्त दुष्कृत समुदाय दग्ध भएर निर्बीज हुन जान्छ। तब मंगलको दिन प्रात:काल नित्य कर्मपछि सबभन्दा पहिले रामलाई, त्यसपछि लक्ष्मणलाई, त्यसपछि महावीरलाई दीक्षित गरेर गुरुमन्त्रको श्रवण गराएर कर्ण पावन गर्नुभयो। सबै प्रकारका वस्त्रहरूबाट तीनैजनालाई सुशोभित गर्नुभयो।

*स्रोत: श्री नाथ चरित*

## बाबा गोरखनाथ

**वावा गोरषनाथ सेवकसुखदाये, भजहुँ तो मन लाये ॥**
**वावा चेला चतुर मचिन्द्रानाथको, अधवुध रुप बनाये।**
**सिवके अंस सिवासनकाये, सिद्धिमाहा वनि आये ॥१॥**
**वावा गोरषनाथ० ।**
**सिंघिनाद जटाकुवरि, तुम्वी वगल दवाये ।**
**सम्थन भाग वघम्बर वैठे, तिनहि लोक वरदाये ॥२॥**
**वावा गोरषनाथ० ।**
**मुद्रा कानमै अति सोभिते, गेरुवा वस्त लगाये ।**
**गलै माल रुद्राछे सेली, तनमें भसम चढाये ॥३॥**
**वावा गोरषनाथ० ।**
**अगम कथा गोरषनाथकि, महिमा पार न पाये ।**
**नरभुपालसाहजिउको नन्दन, पृथ्वीनारायन गाए ॥४॥**
**वावा गोरषनाथ० ।**

***– श्री ५ पृथ्वीनारायण शाह***

(स्रोत : इतिहासप्रकाशमा सन्धिपत्रसंग्रह, योगी नरहरिनाथ)

# गुरु गोरखनाथ–एक बहुआयामिक व्यक्तित्व

**तान्त्रिक साधनाहरु संकुचिक हुन गई साधना भनेको मासु, मदिरा र मैथुन मानिने समाजमा व्याप्त अन्धविश्वास, व्यभिचार, बली, जादू, टुनामुना, नारी शोषण, वेश्यावृत्तिजस्ता विकृतिहरुलाई हटाउन यिनीहरु विरुद्ध उहाँले चुनौतिको घोषणा गर्नुभयो । नारीहरुको शोषण र उनीहरुमाथि भइरहेका अत्याचारलाई बुझेर उहाँले यी निकृष्ट क्रियाकलापहरुलाई सुधार्न समाजसँग टक्कर लिनुभयो । यसबाट समाजमा स्त्रीहरुको इज्जत बढ्न गयो । उहाँले पाखण्डवादमाथि प्रहार गर्नुभयो, प्राणीबीच समान व्यवहारका लागि आवाज उठाउनुभयो ।**

नेपालीहरूको मानसपटलमा प्रात:स्मरणीय व्यक्तित्वको नाम लिन पर्दा महायोगी गुरु गोरखनाथको नाम अग्रपङ्क्तिमा आउँछ । उहाँलाई गोरक्ष, गोरक्षनाथ, गोरषनाथ, गोरखनाथ आदि नामले बढी जानिन्छ । इतिहासमा हेर्‍यौं भने पनि जताततै उहाँका प्रसङ्गहरू पाइन्छन् । विद्यालयहरूमा पढाइने पाठ्यपुस्तकहरूमा उहाँको प्रसङ्ग पाइनु आदिले नेपाली जनमानसमा उहाँ अमर भएर रहनुभएको छ । गोरक्ष सहस्रनाम, योगीसम्प्रदायाविस्कृति, गोरक्ष सिद्धान्त संग्रह, योगी नरहरिनाथरचित नवनाथ-नवकम, श्रीनाथ तीर्थावली, आर्दश योगी, श्री शिव गोरक्ष : नाथंप्रदाय, महायोगीहरूको परिचय, सिद्धसिद्धान्तपद्धति, तहकीकात चिरतीजस्ता पुस्तकहरू उहाँको महिमा, योगदान र क्रियाकलापहरूले भरिएका छन् । 'गोरखनाथ एण्ड कनफट्टा योगी' नामक पुस्तकमा विदेशी लेखक ब्रिग्सले उहाँको बारेमा धेरै अनुसन्धान गर्नुभएको छ । उहाँसम्बन्धी स्वदेशी तथा विदेशी धेरै लेखकहरूले थुप्रै अनुसन्धानात्मक लेख, रचनाहरू विभिन्न पत्रपत्रिकाहरूमा प्रकाशित गराउँदै आइरहेको पाइन्छ भने धेरै विद्यार्थीहरूले गुरु गोरखनाथसम्बन्धी शोधपत्र पनि लेख्ने गरेका छन् ।

महायोगी गुरु गोरखनाथलाई अझैसम्म हाम्रो मानसपटलमा ताजै राख्ने कुराहरूको खोजी गर्दा नेपालस्थित उहाँका विभिन्न मठ-मन्दिर, देवालय, अखण्ड धुनी, गुठी मान्न सकिन्छ । नेपालका विभिन्न जिल्लाहरूमा नाथसम्प्रदायका सिद्ध पीठहरू छन् । काष्ठमण्डपमा रहेको गुरु गोरखनाथको शक्तिपीठ, मृगस्थलीको शक्तिपीठ, गोरखाको गोरख गुफा, त्यस्तै बैतडीस्थित श्रीजगन्नाथको मन्दिर, दार्चुलाको श्रीलरिनाथ, कर्णाली प्रदेशमा राजा चन्दननाथको जुम्लास्थित मन्दिर, दाङ चौघेरास्थित सिद्ध राजा रतननाथको मन्दिर, दीपायलको दिलीपेश्वर मन्दिर, पाल्पाको भैरव बाबा भैरवनाथका मन्दिर हुन् । कान छेडेर कुण्डल लगाएका गुरु गोरखनाथका अनुयायीहरू पशुपति मृगस्थली, गोरखाको गोरखगुफा, थापाथली (बागमती पुलनिर) को गुरु गोरखनाथको मन्दिर आदि ठाउँमा अझैसम्म नाथपंथलाई संरक्षण, सम्वर्द्धन गर्दै अघि बढिरहेका भेटिन्छन् । उहाँलाई मान्ने थुप्रै संघ, सम्प्रदायहरू नेपाललगायत भारत पाइन्छन् । नेपाली मुद्रा निष्काशनमा अझै पनि गुरु गोरखनाथको पादुका निशाना छापमा राख्ने र 'श्री श्री श्री गोरखनाथको जय' अंकित गर्ने गरिन्छ ।

जयस्थिति मल्लको ने.सं. ४९९ (वि.सं.१४३६) को ताम्रपत्रमा "देव गोरक्ष" उल्लेख पाइन्छ । त्यस्तै नेपाल संवत् ५११ (वि.सं. १४४८) फर्पिङ अभिलेखमा "गोरक्ष पादुकाभ्यां नम:" उल्लेख भएबाट पन्ध्रौं शताब्दीमा नै गुरु गोरखनाथको प्रभाव परिसकेको बोध हुन्छ । शकसंवत् ४५५ र वि.सं. ५९० को भस्मेश्वर अभिलेखमा "नाथेश्वर" उल्लेख भएको छ । त्यस्तै शकसंवत् ४६९ अर्थात् वि.सं. ६०४ रामदेवको पालाको पशुपति मृगस्थली शिवलिङ्ग अभिलेखमा पनि "नाथेश्वर"को उल्लेख गरिएको छ । यसबाट नेपालको इतिहासमा छैटौं शताब्दीमा नाथ सम्प्रदायको विकास भएको संकेत मिल्दछ ।

ब्रह्माण्डपुराण हयग्रीव संवाद ललितापुर वर्णनमा उल्लेख पाइन्छ–

**तस्य चोत्तरकोणे तु वायुलोको**

**महाद्युतिः । तत्र वायुशरीराश्च सदानन्द महोदयाः ॥**
**सिद्धा दिव्यर्षवश्चैव, पवनाभ्यासिनोऽपरे ।**
**गोरक्ष प्रमुखाश्चान्ये, योगिनो योगतत्पराः ॥**

त्यस्तै,

**तस्माद् दक्षिणतो देवि ! गोरक्षाश्रम रक्षकः ।**
**यत्र सिद्धो महादेवि ! गोरक्षो वसतेऽनिशम् ॥१॥**
**तल्लिङ्ग्गन्तु प्रवक्ष्यामि, शृणु पुष्यतमं स्थलम् ।**
**महातप्तजलं तत्र वर्तते, सर्वदैव हि ॥२॥**

(स्कन्दपुराण, केदारखण्ड, अध्याय ४२)

शिव पुराण, सप्तम अध्याय–

**शिवो गोरक्षरूपेण, योगशास्त्रं जु गोपह ।**
**यमाद्यङ गै र्यथास्थाने, स्थापिता योगिनोदपिच**

गुरु गोरखनाथले समाजमा धेरै किसिमका अद्वितीय कार्यहरू गर्नुभएको छ । सामाजिक, आर्थिक, शैक्षिक क्षेत्रमा उहाँले पुऱ्याउनुभएको महत्त्वपूर्ण योगदानलाई आज पनि सम्पूर्ण विश्व उहाँप्रति नतमस्तक छन् । विशेष गरी उहाँका शैक्षिक योगदानलाई कोट्याउनु पर्दा उहाँले रचना गर्नुभएका विभिन्न ग्रन्थलाई बिर्सन सकिन्न । यी ग्रन्थहरूको अध्ययन हाम्रो जीवनमा नैतिक, धार्मिक, आरोग्यता र शैक्षिक जागरणको माध्यम हुन सक्छन् । 'योगबीज' महाज्ञानले परिपूर्ण ग्रन्थ हो जसमा उहाँका अनुभूतिका प्रसङ्गहरू छन् । उहाँले यस ग्रन्थमा महायोग ज्ञानमाथि प्रकाश पार्नुभएको छ । अहिलेको आधुनिक युगमा जसरी शिक्षक र विद्यार्थीको सम्बन्ध रहेर शिक्षाको प्रचारप्रसार जुन गतिमा भइरहेको छ, गुरु गोरखनाथले पनि गुरु-शिष्य परम्पराबाट शिक्षा, ज्ञानको प्रचारप्रसार गर्नुभयो र गुरु-शिष्य परम्परालाई शुभारम्भ गर्ने उहाँ नै पहिलो व्यक्तित्व हुनुभयो । आज पनि यही परम्परामा नेपाललगायत विदेशमा ज्ञान तथा शिक्षाको अभिवृद्धि भइरहेको छ । गुरु शिष्य परम्परामा उहाँले महायोगी मत्स्येन्द्रनाथलाई आफ्ना गुरु बनाउनुभएको प्रसङ्ग 'गोरखवाणी'मा उल्लेख गर्नुभएको छ ।

गुरु गोरखनाथ रचित ग्रन्थहरू निम्नानुसार छन् :

गोरक्षशतक चतुरशीत्यासन, ज्ञानामृत, योगचिन्तामणि, योग महिमा, योगमार्तण्ड, योगसिद्धान्तपद्धति, अवधूतगीता, गोरक्षकल्प, गोरक्षकौमुदी, गोरक्षगीता, गोरक्ष चिकित्सा, गोरक्ष पंचम, नाडीज्ञान प्रदीपिका, योगसिद्धासनपद्धति, हठसंहिता, शिवसंहिता, शिवयोगदर्पण, शिवयोग सार, शिवयोग सारावली, योग सारावली, योगबीज, अमनस्कमहायोगी, षटचक्र चिन्तामणि, महार्थमञ्जरी परिमलभाष्य, विवेक मार्तण्ड, गोरक्षपद्धति, सिद्धसिद्धान्तपद्धति, गोरक्षबोध, नृपबोध, अमरौधशासन, हठयोग प्रदीपिका, विवेक मार्तण्ड, आत्मबोध, गोरक्ष सहस्रनाम, सप्ताङ्ग योग विद्या, अष्टाङ्ग योग धारण, कायाबोध, गोरक्षसिद्धान्त ।

उहाँले दिनुभएका विधि विधानहरू, साधनात्मक पद्धतिहरू, सिद्धान्तहरू, दर्शनहरू नै आज विभिन्न रूपमा प्रयोग भइरहेका छन् । गोरखनाथप्रदत्त हठयोगलाई अवलम्बन गर्नेहरूलाई हठयोगी र यिनै हठयोगीहरू जसले सिद्धान्तलाई पालन गर्दछन् तिनीहरू नै नाथयोगीका रूपमा रूपान्तरण हुने गर्दछन् ।

गुरु गोरखनाथले सावर मन्त्रको रचना गर्नुभयो जुन मन्त्रहरू अहिले पनि समाजमा यत्रतत्र प्रयोग भइरहेका छन् । व्याकरणको कठिनाइमा नअल्झिई, सरल र जुनसुकै भाषामा पनि सुलभ सावर मन्त्र कुनै पनि समस्याको सटिक उपाय मानिन्छन् । गुरु गोरखनाथले थुप्रै नवीनतम मार्गहरू, आत्मिक खोज अनुसन्धानका विधिहरू समाजलाई दिनुभयो । गुरु गोरखनाथले दिनुभएका हठयोग र सहजयोग अहिले पनि भारत, नेपाल, पाकिस्तान, तिब्बतलगायत अन्य थुप्रै ठाउँमा प्रसारित छन् । यसबाट सामाजिक र धार्मिक जीवन आन्दोलित भइरहेको छ । तान्त्रिक साधनाहरू संकुचिक हुन गई साधना भनेको मासु, मदिरा र मैथुन मानिने समाजमा व्याप्त अन्धविश्वास, व्यभिचार, बली, जादू, टुनामुना, नारी शोषण, वेश्यावृत्तिजस्ता विकृतिहरूलाई हटाउन यिनीहरू विरुद्ध उहाँले चुनौतिको घोषणा गर्नुभयो । नारीहरूको शोषण र उनीहरूमाथि भइरहेका अत्याचारलाई बुझेर उहाँले यी निकृष्ट क्रियाकलापहरूलाई सुधार्न समाजसँग टक्कर लिनुभयो । यसबाट समाजमा स्त्रीहरूको इज्जत बढ्न गयो । उहाँले पाखण्डवादमाथि प्रहार गर्नुभयो, प्राणीबीच समान व्यवहारका लागि आवाज उठाउनुभयो । सम्पूर्ण धर्मलाई योगमा ल्याएर जोडिदिनुभयो, जहाँ बौद्ध धर्मका वज्रयानीहरूदेखि लिएर पाशुपत, शैव, मुस्लिमहरूलाई समेत समेटी मध्यम मार्गको अवलम्बन गर्नुभयो । यस कुरालाई डा. जय शंकर मिश्रले 'प्राचीन भारतका सामाजिक इतिहास'मा उल्लेख गर्नुभएको छ । शैव र योग मार्गका सम्प्रदायहरूलाई उहाँले एउटै मार्गमा विलीन गराउनुभयो । प्रशस्त अनार्य मतका उपासकहरूलाई एक बनाई योग मार्गको परिस्कृत प्रत्यक्ष भिक्षु दर्शन र पातञ्जल योग समकक्ष ल्याएर मिलाइदिनुभयो । यसबाट मुसलमानहरूले समेत जातीयपना र कट्टरताको भावलाई हटाई योगलाई अंगाल्न थाले ।

यसरी गुरु गोरखनाथ पूरै समाजसँग लड्नुभयो । सयौं संघ, संस्था र सम्प्रदायहरूले गर्न नसकेको सामाजिक उत्थान गरेर देखाउनुभयो । यस्ता व्यक्तित्वप्रति नमन ! अस्तु ।

# रोट महोत्सव र मेरा अनुभूतिहरू

काठमाडौँ, ललितपुर, काभ्रेपलाञ्चोक जिल्लाहरूको अनुभवपश्चात् २०६५ मंसिर १ गते गोरखा जिल्ला अदालतमा आइपुगेँ। माता गोरखकाली र गुरु गोरखनाथको दर्शन गरी आफ्नो पदीय जिम्मेवारी सम्हाल्न थालेँ। काठमाडौँ उपत्यकाबाट १४१ किलोमिटर टाढा रहेको धूलो, धूवाँरहित प्रदुषण मुक्त, धेरै जाडो पनि नहुने, गर्मी पनि धेरै नहुने, सुन्दर हिमाल देखिने, कुहिरो लाग्ने, जंगलको हरियालीले ढाकिएको, दरौँदी र मर्स्याङ्दी नदी समेत भएको, भरपुर प्राकृतिक सम्पदाले सजिएको यस गोरखा जिल्ला प्रकृतिको अनुपम वरदानजस्तो लाग्छ।

वैशाखी पूर्णिमा (बुद्ध जयन्ती) श्री श्री महायोगी गुरु गोरखनाथको प्रकट दिवस थियो। त्यसको जानकारी यहीँ आएर मात्र थाहा पाएँ। २०६६ वैशाख २६ गते वैशाखी पूर्णिमाबाट गोरखामा रोट महोत्सव शुरु भयो। प्रायः बिदामा काठमाडौँ जाने म त्यसबेला उक्त रोट अर्पण कार्यक्रममा सहभागी हुन गोरख गुफा पुगेँ। सिद्धाश्रम शक्ति केन्द्रले विगत पाँच वर्षदेखि गुरु गोरखनाथलाई सवालाख रोट अर्पण गर्ने कार्यक्रमको रूपमा रोट महोत्सव प्रत्येक वैशाखी पूर्णिमाबाट ११ दिनसम्म आयोजना गर्दै थियो।

काठमाडौँ रहँदा म भगवान् साईबाबाको आश्रममा जाने गर्थें, त्यहाँको भजन मलाई प्रिय लाग्दछ। यसैले पनि मैले अन्यत्र ध्यान दिएको थिइँन। काठमाडौँमा बस्ने भएर पनि गुरु गोरखनाथप्रति मेरो ध्यान जान पाएको रहेनछ। बाल्यकालमा उहाँको सम्बन्धमा पृथ्वीनारायण शाहलाई उहाँले आशीर्वाद दिनुभएको कुरा मात्र सुनेको थिएँ। उहाँको महिमा तथा अन्य कुराहरू सुन्न पाएको थिइँन। उहाँको महिमाको बारेमा समयमै ध्यान नपुगेकोमा आजभोलि दुःख पनि लाग्ने गर्छ।

रोट अर्पण कार्यक्रममा प्रत्येक दिन साँझ समीको चौतारामा समीक्षा भेला हुन्थे। रोट महोत्सवको पहिलो दिन पनि समीक्षा भेला भएको थियो। त्यस कार्यक्रममा अग्रज सावर पन्थी साधकले गोरक्ष सुरक्षा मन्त्र दिनुभयो। सो मन्त्रका अतिरिक्त ११ दिनको दौरानमा मैले गोरखकाली तथा मनकामना माताको समेत मन्त्र पाएँ। वैशाख २९ गते बेलुकीबाट मैले उक्त गोरक्ष सुरक्षा मन्त्रको जप गर्न शुरु गरेँ। मलाई थाहा थिएन गुरुले मलाई यति चाँडै चिन्नुहुन्छ भनेर। मन्त्र जपपश्चात् नै असीम आनन्द प्राप्त हुन लाग्यो, मेरो मन रमाउन थाल्यो। शुरुका दिनहरूमा त यो के भएको भनेर अचम्म लागिरह्यो। प्रत्येक दिन बिहान ५ बजेपछि ११ माला मन्त्र जप गर्दै गएँ, मन रमाइरहेको थियो, आनन्द प्राप्त भइरहेको थियो, गुरुको नजीक भएको आभाष भइरहेको थियो। म आफ्नो अफिसको जिम्मेवारीप्रति अत्यन्त सचेत, संवेदनशील छु। अफिसको जिम्मेवारी तथा अन्यव्यस्त समयबाहेक फुर्सदको समयमा गुरु गोरखनाथलाई सम्झने गर्दछु।

मानव सेवा सबैभन्दा ठूलो सेवा हो। हाम्रो मनमा जे हुन्छ त्यो हाम्रो बोलीबाट निस्कन्छ, हामीले जे अनुशरण गरिरहेका छौँ हाम्रो व्यवहार त्यस्तै हुन्छ। त्यसैले राम्रो स्वभाव, गुणहरूलाई हामीमा भर्दै लानुपर्छ, खराब विचारलाई आफूभित्र स्थान दिनु हुँदैन भन्ने कुरा एउटा ग्रन्थमा अध्ययन गरेकी थिएँ। मलाई सधैँ लाग्दथ्यो कि व्यक्ति सफल मात्र भएर हुँदैन असल पनि हुनुपर्छ।

गुरु गोरखनाथको मन्त्र जप र ध्यान हाल दैनिक गरिरहेकी छु। गोरखामा बितेका मेरा क्षणहरू अत्यन्त रमाइलो, आनन्ददायक लागिरहेको छ। ममा आत्मविश्वास अझ बढेको छ, एक्लै रहँदा पनि आनन्दसँग समय बितिरहेका छन्। हरेक कुराका एक पत्र चिरेर भित्री भागमा पुगी केही मेहनत गर्नुपर्छ तब मात्र सफलता प्राप्त हुन्छ, राम्रा कुराहरू हामीमा भर्दै लगेपछि मात्र हामी राम्रो व्यक्ति बन्न सक्छौँ भन्ने मलाई लाग्छ।

अन्त्यमा, श्री गुरु गोरखनाथको आशीर्वाद पाउन, लाभान्वित हुन म सबैलाई आग्रह गर्दछु।

***– प्रभा बस्नेत, जिल्ला न्यायाधीश, गोरखा***

# गुरु गोरखनाथले बोलाउनुभयो

–उद्धव सुवेदी

जीवन बाँच्ने तरीका र रुचि सबैको एउटै नहुन सक्छ । फरक फरक रुचि र शैलीका साथ मानिसहरू बाँचिरहेका हुन्छन् । फरक फरक शैलीका जीवन बाँच्ने माध्यम भने सबैको एउटै नहुन पनि सक्छ । जीवनयापन सुखका साथ मात्रै नहुन पनि सक्छ । जीवन जियाइ परमात्माको कृपा, आर्शीवादको खेल र उसको आफ्नै अनुभव र अनुभूतिसहित पनि हुने गर्छ ।

यस्तै सोच र चिन्तनका साथ यथाशक्य आफूलाई खुशी र समभावका साथ बाँच्ने प्रयासमा रहेको यो मेरो जीवनलाई प्रभुले (सद्गुरुदेवले) सुरक्षित र आत्मसुखका अनुभूतिका साथ अगाडि डोऱ्याइरहनुभएको छ । यस्तो अनुभव र अनुभूति प्राप्तिमा रमेर मेरो प्रभुमा यो बाँकी जीवनलाई समर्पण गर्दै म अगाडि बढिरहेको छु ।

यिनै सत्य तथ्यको जीवन्त अनुभवको ऊर्जा प्रदान गरेर मलाई सद्गुरुदेवहरूले पालैपालो अनेक तरहको प्रत्यक्ष, अप्रत्यक्ष दर्शन दिँदै मेरो यस भौतिक जीवनको यात्रालाई निरन्तरता प्रदान गरिरहनुभएको छ ।

एकदिनको मेरो आत्मिक यात्राको क्रममा बाबा गुरु गोरखनाथले मलाई कति हदसम्म माया र स्नेह गर्नु हुँदोरहेछ, गरिरहनुभएको रहेछ भन्ने कुराको ज्वलन्त उदारहण उहाँले मलाई भोगाएर देखाइदिनुभयो । मैले भोगेका तिनै कुरालाई आज यहाँहरूसमक्ष वर्णन गर्न पाउँदा निकै हर्षित भइरहेको छु ।

म गोरख गुफामा प्राणेश्वर सद्गुरुदेवको दर्शनार्थ दक्षिणतर्फको सिँढीहरू चढ्दै हनुमान् भञ्ज्याङ्ग चौतारा पुगेर दरवार किल्लाभित्र प्रवेश गर्ने मूलद्वारतर्फ लाग्दै थिएँ । यत्तिकैमा गोरखनाथ बाबाले उहाँकै गुफा मन्दिरको गजुर रहेको ठाउँमा बसेर बोलाउँदै मलाई ढोकाबाट नआएर सीधै त्यस चौताराबाट उहाँ भएको ठाउँमा आउन भन्नुभयो ।

तर गुरुदेव बस्नुभएको ठाउँ अत्यन्त चुली परेको पहाडको चुचुरोजस्तै थियो र ती पहाडजस्ता तीखा तीखा पत्थरहरूको भिरालो भागबाट गुरुदेवसमक्ष पुग्न अत्यन्त कठीन मात्रै होइन, सम्भव नै नभए जस्तो परिस्थिति थियो । गुरु गोरखनाथ बाबाले चाहिँ सीधै ती भीर चढेर तीखा तीखा ढुङ्गाका भीर उक्लेर आउन भनिरहनुभएको थियो । त्यसैले म पनि ती तीखा ढुङ्गाहरूका भीर चढ्दै उहाँ भएको ठाउँमा पुग्दै थिएँ । यत्तिकैमा मेरो पैतालाबाट रगत बगिरहेको देखेर ‘पर्खीपर्खी’ भन्दै गुरुदेव स्वयं मतिर आउनुभयो । अनि मेरो पाखुरामा समातेर चौतारामा लिएर आउनुभयो । आज जहाँ हामी भजनकीर्तन, नाचगान गर्छौं, त्यही चौतारामा एकातिर हवनको लागि यथेष्ट काटेर टुक्राएर राखिएका दाउराहरू डङ्गुर थिए, अर्कोतर्फ सँगै हवनकुण्ड तैयार थियो, भव्य साज सजावटका साथ हवन शुरु गर्न मात्र बाँकी रहेको अवस्था थियो । अनि मलाई त्यही हवन गर्ने ठाउँमा बस भनेर राख्नुभयो । त्यसपछि ज्ञात-अज्ञात, चिन्नै नसकेका देवताहरू, ऋषिहरू पनि मसँगै बस्नुभयो । हवन शुरु हुन बाँकी हुँदा नहुँदै म आन्तरिक यात्राबाट बाहिरीसकेछु । त्यसपछि मलाई अरू कुनै याद हुन सकेन ।

त्यसपछिका दिनका यात्राहरूमा पनि मलाई गुरुदेवले यज्ञभूमि, यज्ञकुण्ड, यज्ञ भइरहेको स्थानमा मेरो पनि सहभागिता राखिदिनुभएको घटनागत सुखद स्मृतिका अनुभवहरू मलाई मेरा प्राणाधार सद्गुरुदेवहरूले मेरो बाँकी भौतिक जीवन मात्रको लागि ऊर्जास्वरूप प्रदान गरिदिने गर्नुभएको कुरा निवेदन गर्दै बाँकी अन्यान्य अनुभूतिहरू आदेश पाएमा पछि प्रकट गर्दै जानेछु भन्ने विश्वास दिलाउन चाहन्छु । जय गुरुदेव ।

चाबहिल, काठमाडौं ।

*(परमपूज्य सद्‌गुरुदेव श्री शिव गोरक्षसम्बन्धी विभिन्न सत्य तथ्य कुराहरूको बारेमा जानकारी दिने क्रममा श्री सावर संरचना शक्ति केन्द्र नेपालद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा लिखित 'श्री शिव गोरक्ष-नाथंप्रदाय' ग्रन्थबाट विभिन्न प्रसंगहरू क्रमशः प्रकाशित गर्दै आइरहेका छौँ ।)*



## गुरु मत्स्येन्द्रनाथद्वारा निर्मित नवनाथ

भगवान् आदिनाथपछि नाथ सम्प्रदायमा गुरु मत्स्येन्द्रनाथले आफू मूलनाथ बनी नवनाथ निर्माण गर्नुभएको पाइन्छ । तर पनि उहाँले निर्माण गर्नुभएका नवनाथहरू को को हुनुहुन्छ भनेर यकीनका साथ भन्न सकिँदैन । विभिन्न विद्वान्हरूले विभिन्न नाथहरूलाई गुरु मत्स्येन्द्रनाथसँग जोडेर व्याख्या गरेको पाइन्छ । योगी विलासनाथले 'नवनाथ' पुस्तकमा उल्लेख गर्नुभएका चौरासीनाथभित्रका नवनाथ यसप्रकार छन्-

१. गुरु मत्स्येन्द्रनाथ
२. गुरु गोरखनाथ
३. चौरङ्गीनाथ
४. मन्जुनाथ
५. तारानाथ
६. शावरनाथ
७. कालनाथ
८. प्रभुदेवनाथ
९. प्रकाशनाथ

त्यस्तै, विभिन्न विद्वान्हरूले गुरु मत्स्येन्द्रनाथलाई मूलनाथ बनाई यसरी पनि नवनाथको निर्माण गरेका छन्–

१. मत्स्येन्द्रनाथ
२. गोरखनाथ
३. जालन्धरनाथ
४. चौरङ्गीनाथ
५. कनिफानाथ
६. कणेरीनाथ
७. चर्पटीनाथ
८. कंथडिनाथ
९. गोपिचन्दनाथ

'योगी सम्प्रदायविष्कृति'मा नवनाथलाई नवनारायणको अवतार मानिएको छ जसअनुसार कवि नारायण अर्थात् गुरु मत्स्येन्द्रनाथलाई मूल नाथ मानी बनाइएको नवनारायणको नामावली यसप्रकार–

१. कवि नारायण -मत्स्येन्द्रनाथ
२. करभाजन नारायण -गहिनीनाथ
३. अन्तरिक्ष नारायण -जालन्धरनाथ
४. प्रबुद्ध नारायण -करणिपानाथ
५. आविर्होत्र नारायण -नागनाथ

६. विप्पलायन नारायण -चर्पटनाथ

७. चमस नारायण -रेवणनाथ

८. हरि नारायण -भर्तुनाथ

९. द्रुमिल नारायण -गोपिचन्द्र

मराठी भाषाको नवनाथ कथामा व्याख्या गरिएका नवनाथहरूमा मत्स्येन्द्रनाथलाई मूलनाथ मानी अन्य नाथहरूको निर्माण यसप्रकार गरिएको पाइन्छ-

१. मत्स्येन्द्रनाथ
२. जालन्धरनाथ
३. गोरक्षनाथ
४. रेवणनाथ
५. नागनाथ
६. भर्तुहरिनाथ
७. चर्पटीनाथ
८. कृष्णपादनाथ
९. गहनीनाथ

त्यस्तै, महाराष्ट्रको परायण ग्रन्थ ढुडिराज विरचित 'चिन्तामणि विजय'मा नवनाथको उल्लेख यसप्रकार गरिएको छ-

१. मत्स्येन्द्रनाथ
२. गोरक्षनाथ
३. जालन्धरनाथ
४. कनिफानाथ
५. चर्पटीनाथ
६. नागनाथ
७. भर्तुहरिनाथ
८. रेवणनाथ
९. गहनीनाथ

नवनाथसँग सम्बद्ध योगीहरूलाई उच्च आदर र सम्मानका साथ उल्लेख गरिएका थुप्रै ऐतिहासिक प्रमाणहरू भेटिन्छन् । समाजमा नवनाथको रूपमा नाथयोगीहरूले दिएको विशिष्ट योगदान आफैमा अवर्णनीय छ, अतुलनीय छ । नवनाथहरूको चर्चा गर्ने क्रममा हामीले विभिन्न नामहरूलाई नवनाथको रूपमा उल्लेख भएको पायौं । यी नामहरू आफैमा उच्चकोटिका छन्, उच्च आदर्श बोकेका छन् । नाथ सम्प्रदायमा अनेकौं सिद्ध योगी महायोगीहरू छन्, प्रत्येक योगीको उच्चताले समाजमा पारेको प्रभाव त्यतिबेलाका विद्वान्हरूमा, लेखकहरूमा कविहरूमा परेको छापअनुसार उनीहरूले व्याख्या गर्दा पनि कैयौं नामहरू दोहोरिने गरेको पाइन्छ भने कैयौं नामहरू कुनै सूचीमा पर्ने र कुनै सूचीमा नपर्ने गरेको पाइन्छ । धेरै विद्वान् लेखकहरूले गर्नुभएको खोज, अनुसन्धान आफैमा प्रशंसनीय छ । क्रमश:

जय गुरुदेव !

## २०६७ ज्येष्ठ महिनाका शुभ समयहरू

**ज्येष्ठ २, ९, १६, २३, ३० गते (आइतबार)**
सर्वश्रेष्ठ– दिन ३:३६–४:२४
रात्रि ४:२४–६:००
श्रेष्ठ– दिन ६:००–८:२४, ११:३६–२:४८
रात्रि ६:४८–१०:००, १२:२४–२:४८

**ज्येष्ठ ३, १०, १७, २४, ३१ गते (सोमबार)**
सर्वश्रेष्ठ– रात्रि २:४८–३:३६
श्रेष्ठ– दिन ६:००–७:२४, ९:१२–११:३६
रात्रि ८:२४–११:३६

**ज्येष्ठ ४, ११, १८, २५ गते (मंगलबार)**
सर्वश्रेष्ठ– रात्रि ५:१२–६:००
श्रेष्ठ– दिन १०:००–११:३६, ४:३६–६:००
रात्रि ६:४८–१०:००, १२:२४–२:४८

**ज्येष्ठ ५, १२, १९, २६ गते (बुधबार)**
सर्वश्रेष्ठ– दिन ६:४८–८:२४
श्रेष्ठ– दिन ८:२४–१०:००, २:४८–५:१२
रात्रि ७:३६–९:१२, १२:२४–२:४८

**ज्येष्ठ ६, १३, २०, २७ गते (बिहीबार)**
श्रेष्ठ– दिन ६:००–७:३६, १०:००–११:३६, ४:२४–६:००
रात्रि ९:१२–११:३६, २:००–४:२४

**ज्येष्ठ ७, १४, २१, २८ गते (शुक्रबार)**
सर्वश्रेष्ठ– रात्रि १०:२८–११:३६
श्रेष्ठ– दिन ६:००–६:४८, ७:३६–१०:००, १२:२४–३:३६
रात्रि ७:३६–९:१२, १:१२–२:४८

**ज्येष्ठ १, ८, १५, २२, २९ गते (शनिबार)**
सर्वश्रेष्ठ– दिन ६:००–६:४८
रात्रि ८:२४–९:१२
श्रेष्ठ– दिन १०:३६–१२:२४
रात्रि ९:१२–१०:४८, २:४८–३:३६, ५:१२–६:००

**नोट**:
दिन–भन्नाले बिहान ६:०० देखि साँझ ६:०० सम्म
रात्रि–भन्नाले साँझ ६:०० देखि अर्को बिहान ६:०० सम्म

*परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूद्वारा रचित 'ज्योतिष और काल निर्णय' ग्रन्थमा आधारित ।*

# दीक्षा विधि



**धारावाहिक अभ्यास भाग ७ (प्रथम चरणको अन्तिम भाग)**

ध्यानको सातौँ विधिमा दीक्षित हुने प्रक्रिया हुन्छ । आधिकारिकता प्राप्त गर्ने प्रक्रिया हुन्छ । ध्यानका विधिहरूमार्फत् सूक्ष्मतामा गुरुहरूसँग जोडिने प्रक्रिया हुन्छ। त्यसैले पनि यो विधि आफैमा महत्त्वपूर्ण छ ।

ध्यानको सातौँ विधिमा अगाडिका विधिहरूलाई पनि समेटिएको हुन्छ । यसैले यो विधिलाई आफैमा पूर्ण विधि मानिन्छ। अगाडिका विधिहरूको अभ्यासपछि व्यक्तिमा अलि परिपक्वता आएको हुन्छ, ध्यान गर्ने बानीको विकास भएको हुन्छ, बस्ने अभ्यास भएको हुन्छ ।

यस ध्यानमा अगाडिका विधिहरू पनि पर्ने भएकोले अबका दिनहरूमा पछाडिका विधिहरू छाडेर यही विधिलाई मात्र गर्न सकिन्छ ।

ध्यान हेर्दा सजिलो देखिए पनि धेरैलाई गाह्रो लाग्न सक्दछ। शुरु शुरुका दिनमा ध्यान भन्ने बित्तिकै सोचेजस्तो रूपमा नलाग्न पनि सक्छ। तैपनि प्राप्त विधिको अभ्यास गरिहरनुपर्दछ । यस विधिको अभ्यासले हामीमा एक किसिमको परिवर्तन ल्याउन ठूलो सहयोग गरेको हुन्छ । हाम्रो सोचाइ, विचार, चिन्तनमा ध्यानको माध्यमबाट धेरै परिवर्तन पाउन सक्छौँ । यस ध्यानका माध्यमबाट सोच्न सक्ने क्षमता, साथसाथै कुन बेला कस्ता खालका कार्यहरू गर्ने, कस्तो खालको निर्णय लिने आदि ज्ञान समेत प्राप्त गर्न सक्छौँ ।

यस ध्यानको अभ्यासबाट हामी सूक्ष्म जगत्मा समेत प्रवेश गर्न सक्दछौँ । बारम्बारको अभ्यासले हामीलाई दिव्यता, उच्चताको प्राप्ति हुन थाल्दछ । आत्मशरीर जागृत हुने प्रक्रियामा अगाडि बढ्न थाल्दछ । देवीदेवता, दिव्य शक्तिहरूसँग साक्षात्कार हुन थाल्दछ। विभिन्न लोक लोकान्तरको बारेमा ज्ञान थाहा हुन थाल्दछ। यसरी ध्यानको अभ्यास क्रमले स्वाभाविकरूपमा हामीलाई समाधिमा जान अनुकूल हुन थाल्दछ। ध्यानको विकास नै समाधिको स्वरूप हो । यसैले नित्य एवं निरन्तररूपको अभ्यासले असोचनीय फाइदा दिन थाल्दछ, समाधिस्थ हुन सहयोग पुऱ्याउँदछ जहाँबाट हामीले सम्पूर्ण चीज प्राप्त गर्न सक्दछौँ ।

ध्यानबाट हुने फाइदालाई दृष्टिगत गरेर आफ्नो ध्यानलाई निरन्तरता दिन अब सातौँ विधिको अभ्यासतर्फ लागौँ ।

## तरीका :

१. अनुकूल मिल्ने वस्त्र लगाउने, भएमा सल, मालाहरू लगाउने ।

२. धेरै समय बस्दा अप्ठ्यारो लाग्ने आसनमा नबसी सजिलो लाग्ने, अनुकूल हुने सुखासन, अर्धपद्मासन वा अन्य आसनमा बस्न सकिनेछ ।

३. आफ्नो अगाडि गुरुहरूको फोटो वा आफूले मानीआएका देवीदेवता वा इष्टहरूको फोटो राख्ने, अगरबत्ती बाल्ने, अनुकूल भए दीयो बाल्ने ।

४. सहस्रारमा परमपूज्य सद्गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई गुरु रूपमा धारण गर्ने, हृदयमा आफूले मानेका देवीदेवताहरूलाई धारण गर्ने ।

५. तीनपटक ॐकार गर्ने र तलको श्लोक तीनपटक उच्चारण गर्ने-

**"गुरुर्ब्रह्मा गुरुर्विष्णुः गुरुर्देवो महेश्वरः**
**गुरुः साक्षात् परब्रह्म तस्मै श्री गुरवे नमः ॥"**

६. त्यसपछि दुवै हात रगडेर आँखा सेक्ने र आफ्नो अगाडि ढोगिदिने ।

७. ब्रह्म मुद्रामा बस्ने ।

८. शिरमा शिवलिङ्ग सम्झने र त्यसमाथि दुवै गुरुहरू श्री श्री महायेगी गुरु गोरक्षनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई स्मरण गर्ने ।

९. २१ पटक ॐकार उच्चारण गर्ने ।

१०. आफ्नो अनुकूलताअनुसार १५ मिनेटदेखि ३०, ४५, ६० मिनेटसम्म गर्न सकिनेछ ।

११. तीनपटक ॐकार उच्चारण गर्ने ।

१२. तीनपटक तलको श्लोक उच्चारण गरेर भन्ने-

**"गुरुर्ब्रह्मा गुरुर्विष्णुः गुरुर्देवो महेश्वरः**
**गुरुः साक्षात् परब्रह्म तस्मै श्री गुरवे नमः ॥"**

१३. दुवै हात रगडेर शिरमा सेक्ने, आँखामा सेक्ने, घाँटीमा सेक्ने, छातीमा सेक्ने, नाभिमा सेक्ने, पुनः दुवै हात रगडेर आँखा सेक्ने, आफ्नो हत्केला हेर्दै अगाडि ढोगिदिने । जय गुरुदेव !



कविता

## गुरुवर प्रेम

माया बस्न गयो मलाई
मेरै गुरुवर माथि
याद आइरहोस् है
तिम्रै नै सधैंभरि ।

बसिदिनुहोस् मन मन्दिरमा
फुलका सुवास सरी
आशीर्वाद पाइरहौं तिम्रै नै
सूर्यका किरणसरी ।

यो मन डुलिरहोस् हरदम
गुरु चरणमा सधैंभरि
गुरु नाम जप्न पाऊँ
जीवनभरि एक मन गरी ।

नटुटोस् हजूरको साथ
यो जीवनमा कसैगरी
सपनी अनि विपनीमा
छाइदिनुस् प्राणवायु बनी ।

दुई जोडी गुरु चरण पखाल्न पाऊँ
मेरा तुच्छ यी आँसुले भए पनि
मन त मेरो पापले पूर्ण
भजन पाऊँ त्यै मनले भए पनि ।

बस्दा, उठ्दा, सुत्दा हरपल
देख्न पाऊँ ती दिव्य माथहरु मनैभरि
हजूरको साथ अनि आशीर्वाद
भइरहोस् जनम जनमभरि ।

*– नीरजनारायण मल्ल*
*सम्पर्क कार्यालय, पोखरा*

# आफ्नो हात आफैं हेरौं

*यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार हस्तरेखासम्बन्धी जानकारीहरु पाठकवर्गसमक्ष राख्दै आइरहेका छौं । आशा छ, यसबाट यहाँहरु लाभान्वित हुनुहुनेछ ।*

## हृदय रेखा

**हत्केलामा जीवन रेखा र मस्तिष्क रेखाजत्तिकै महत्त्व हृदय रेखाको पनि छ । त्यसैले विद्वान्हरुले हृदय रेखाको सावधानीपूर्वक अध्ययन गर्नुपर्छ ।**

जसको हत्केलामा हृदय रेखा शुद्ध, स्पष्ट, निर्दोष र लालिमायुक्त हुन्छ, ऊ आफ्नो जीवनमा अवश्यै सफल हुन्छ, उसलाई समाजबाट पूर्णरुपमा यश तथा सम्मान प्राप्त हुन्छ । उसले सामाजिक उत्तरदायित्वलाई ख्याल गरेको हुन्छ र आफ्नो जीवनमा मानवोचित गुणलाई अवलम्बन गरेर ऊ अगाडि बढ्छ ।

यदि यो रेखा अस्पष्ट, कमजोर र टुटेको वा काटिएको छ भने त्यस व्यक्ति जति नै दृढ एवं धनबान् नै किन नहून् उसलाई सही अर्थमा मानिस भन्न सकिन्न किनकि यस्तो व्यक्ति हृदयले स्वार्थी, पापी तथा कलुषित हुन्छ । यस्तो व्यक्तिलाई सहजरुपमा विश्वास गर्न हुँदैन ।

हृदय रेखा

हृदय रेखा मनुष्यको हत्केलामा कान्छी औंलाको तल बुध पर्वतको मुनिबाट प्रारम्भ भएर सूर्य तथा शनि क्षेत्रलाई पार गर्दै गुरु पर्वतसम्म पुग्छ तर सबै हत्केलामा यस्तो नहुन सक्छ । सामान्यतः यस रेखाका पाँच अवस्थाहरु पाइन्छन् जुन निम्न प्रकार छन्–

१. पहिलो प्रकारको हृदय रेखा यस्तो हुन्छ जुन बुध पर्वत मुनिबाट प्रारम्भ भएर सूर्य र शनि पर्वत मुनि भएर गुरु पर्वतसम्म पुगेर समाप्त हुन्छ ।

२. केही मानिसहरुको हत्केलामा यो रेखा बुध पर्वत मुनिबाट प्रारम्भ भएर सूर्य, शनि तथा गुरु पर्वतको तल तल हुँदै हत्केलाको पारीसम्म पुग्दछ ।

३. केही मानिसको हत्केलामा यो रेखा बुध पर्वतमुनिबाट निस्केर सूर्य पर्वत मुनि नै समाप्त हुन्छ ।

४. केही हत्केलामा यो रेखा बुध पर्वतको

मुनिबाट निस्केर शनि पर्वत मुनि समाप्त हुन्छ ।

५. केही व्यक्तिहरुको हत्केलामा यो रेखा बुध पर्वतको मुनिबाट निस्केर चोरी औंला र माझी औंलाको बीचमा गएर समाप्त हुन्छ ।

उपर्युक्त पाँचै प्रकारको स्थितिको अध्ययनबाट त्यसको फलादेशमा अन्तर देखिन्छ । यस रेखाबाट मानिसको हृदय, इच्छाहरु, व्यवहार, भावना, मानसिक क्रिया र आन्तरिक गोपनीय तथ्यहरुको जानकारी प्राप्त हुन्छ ।

## पहिलो प्रकारको हृदय रेखा

यस्तो प्रकारको हृदय रेखा जसको हत्केलामा देखिन्छ, त्यो सर्वश्रेष्ठ रेखा मानिन्छ । वास्तवमा हेर्ने हो भने यस्तो रेखाले आफ्नो अन्तिम अवस्थामा शनि र गुरु पर्वतलाई विभक्त गर्दछ । यस्ता व्यक्ति अरुको भलाई गर्ने र निष्पक्ष, स्वतन्त्र विचारधाराका हुन्छन् । यस्ता व्यक्तिले प्रेमको क्षेत्रमा धैर्यपूर्वक काम लिने हुन्छन् । यस्ता व्यक्तिको जीवनमा न त उच्छृंखलता हुन्छ न त अधूरोपना नै हुन्छ । यस्ता व्यक्ति आफ्नो वचनलाई सामर्थ्य ठान्छन् र जीवनमा जे बोल्दछन् त्यसलाई पूर्णरुपमा निभाउने क्षमता राख्छन् ।

यस्ता व्यक्ति हल्का स्तरका हुँदैनन् तथा आफ्नी पत्नीलाई नै सबैभन्दा अधिक महत्त्व दिन्छन् । यद्यपि यस्ता व्यक्तिको जीवनमा प्रेमिकाहरु हुन्छन् तर उनीहरुले प्रेमिकाहरुलाई आवश्यकता भन्दा बढी महत्त्व दिँदैनन् । यस्ता व्यक्ति धार्मिक, सात्त्विक तथा ईमानदार हुन्छन् । न त यस्ता व्यक्तिले धोका खान्छन् न त कसैलाई धोका दिने प्रयत्न गर्छन् । यस्ता व्यक्तिको हृदय दयालु हुन्छ । यस्ता व्यक्तिको जीवनलाई आदर्श जीवन भन्न सकिन्छ । यस्ता व्यक्ति आफ्नो प्रयत्नबाट जीवनमा यश, मान, पद, प्रतिष्ठा प्राप्त गर्छन् ।

## दोस्रो प्रकारको हृदय रेखा

यसमा हृदय रेखाको उद्गम बुध पर्वत मुनिबाटै हुन्छ, तर यसको अन्त चोरी र माझी औंलाको बीचमा नभई गुरु पर्वतको मुनिबाट हुँदै हत्केलाको नजिक गएर हुन्छ । यस्तो रेखा अत्यन्तै कम मानिसहरुको हत्केलामा देखिन्छ । तर जसको हत्केलामा यस्तो रेखा हुन्छ ऊ जीवनमा आवश्यकताभन्दा बढी महत्त्वाकांक्षी हुन्छ र आफ्नो प्रयत्नले आफ्नो जीवनलाई सुखमय बनाउनमा समर्थ हुन्छ ।

वास्तवमा हेर्ने हो भने यस्तो व्यक्ति कठोररुपमा परिश्रमी हुन्छ र उसको लक्ष्य भनेको सधैं आफूसँगै रहन्छ । जबसम्म आफ्नो लक्ष्यलाई उचितरुपमा प्राप्त गर्दैन, तबसम्म उसले विश्राम लिँदैन ।

यस रेखाको बारेमा विचारणीय तथ्य यो हो कि जहाँ यो रेखा समाप्त हुन्छ, त्यस स्थानको बारेमा सूक्ष्मरुपमा अध्ययन हुनु आवश्यक हुन्छ । यदि अन्तिम स्थितिमा यस रेखाको झुकाव तलतिर छ भने उसले जीवनमा आफ्ना इच्छाहरुलाई पूर्ण गर्न सक्दैन । तर अन्तिम अवस्थामा यदि यो रेखा माथितिर उठेको छ भने यस्तो व्यक्ति जीवनमा आफ्नो लक्ष्यसम्म पुग्छ र उसले सोचेका सबै पूरा हुन्छन् । यस्तो व्यक्ति आफ्नो जीवनमा यश, मान, पद, प्रतिष्ठाको दृष्टिले पूर्ण सौभाग्यशाली मानिन्छ । जय गुरुदेव !

# मणिपुर चक्र

**तस्योर्ध्वेनाभिमूले दशदललसिते पूर्णमेघप्रकाशे,**
**नीलाम्भोजप्रकाशैरुपहितजठरे डादिमान्तैः सचन्द्रैः ।**
**ध्यायेद् वैश्वानरस्यारुणमिहिरसमं मण्डलं तत् त्रिकोणं,**
**तद्बाह्ये स्वस्तिकाख्यैस्त्रिभिरभिलसितं तत्र बाह्यै स्वबीजम् ।**
-षट्चक्र निरूपण भा. २/१९

मणिपुर चक्र नाभिमण्डलको पछाडि मेरुदण्डभित्र सुषुम्नामा निलो वर्णको ऊर्ध्वमुखी कमल हुन्छ । यसमा दश दलहरू हुन्छन् जसमा 'डं', 'ढं', 'णं', 'तं', 'थं', 'दं', 'धं', 'नं', 'पं' 'फं' बीजहरू विद्यमान छन् । अग्नि तत्त्वको प्रतिनिधित्व प्राप्त यो चक्रको रूप, गुण र रंग पनि अग्निसमान नै हुन्छ । यसको मध्य कर्णिकामा स्वस्तिक आकारको तेजमण्डल हुन्छ । जसको मध्यमा सूर्यको समान तेज धारण गरेको 'रं' बीज स्थित छ । यसको पार्श्वमा सिन्दूरसमान वर्ण भएका देहमा भस्म लगाएका चक्रका अधिपति 'रुद्र' विराजमान छन् तथा अंगमा कालो वर्णको 'लाकिनी शक्ति' स्थित छ । यस त्रिकोणाकार यन्त्रको भेदन गर्नाले सरस्वती प्रसन्न हुन्छिन् । यो चक्र समान प्राणको सञ्चालक हो ।

नाभिको ज्ञान सामान्यतया सबै मानिसमा हुने गर्दछ । नाभिस्थल नै त्यो स्थल हो जसको माध्यमबाट गर्भस्थ शिशुमा माताबाट भोजन र वायु अर्थात् जीवनीशक्ति प्राप्त हुन्छ ।

यस चक्रको जागरण भस्त्रिका र अन्य प्राणायामहरूको मिश्रित प्रयोगबाट सम्भव हुन्छ । यस क्रियालाई कुनै योग्य गुरुको सान्निध्यतामा रहेर सिक्नुपर्दछ । यस्तो गुरु जो स्वयंको मणिपुर चक्र पूर्णरूपले जागृत भएको होस् ।

यस चक्रको जागरणपश्चात् मानिसले पूर्ण मनुष्यत्व प्राप्त गर्दछ । यो चक्र नै मनुष्यत्व र देवत्वबीचको सीमा रेखा हो ।

यस चक्रको जागरणपश्चात् जब कुण्डलिनी शक्ति अगाडि बढ्दछ तब मनुष्यको प्रत्येक पाइला देवत्वतर्फ अग्रसर हुने गर्दछ । उसले भौतिकताको पूर्ण उपयोग दैवीय गुणहरूको आधारमा गर्ने गर्दछ । तब मानवको चिन्तन र विचार आध्यात्मिकताबाट स्वतः नै प्रेरित हुन थाल्दछ ।

यस चक्रको जागरणबाट व्यक्ति सबै पापबाट मुक्त हुन्छ र उसको हृदयमा दया, ममता, करुणा, सौहार्द्र आदिको उदय हुन थाल्दछ । त्यसपछि उसमा सांसारिक दोष क्रोध, ईर्ष्या, झूठ, व्यभिचार आदिको कुनै प्रभाव रहँदैन । समस्त दोषहरूबाट मुक्त हुने भएकोले उसको वाणी ओजस्वी हुन्छ, अनुहार र पूरै शरीरको चारैतिर व्याप्त चुम्बकीय शक्ति द्विगुणित हुन जान्छ । उसको मुखबाट उच्चरित प्रत्येक शब्द

सत्य हुन्छ । विचारहरूको परिर्वतनका कारण उसको हृदयमा शान्ति व्याप्त हुन्छ । उसलाई ध्यानको प्रथमावस्था प्राप्त हुन्छ ।

## दश विशिष्ट उपलब्धि

मणिपुर चक्र शरीरको केन्द्र बिन्दु हो । यहाँ कैयौँ प्रमुख नाडीहरू आएर मिल्दछन् । यस चक्रको मूल बीज मन्त्र हो 'रं' । यस चक्रको जागरणपश्चात् दश उपलब्धिहरू प्राप्त हुन्छन् किनकि यस चक्रमा दश दल निलो रंगको कमल सदृश्य हुन्छ ।

**'डं'**– यस दलको जागरणपछि पाचन क्रियासँग सम्बन्धित नाडीहरू पूर्ण चैतन्य बन्दछन् । जसबाट पेटसँग सम्बन्धित व्याधिहरू शमन हुन्छन् र व्यक्तिलाई पूर्ण शारीरिक स्वास्थ्य प्राप्त हुन्छ ।

**'ढं'** – यस दल जागृत भएपछि व्यक्तिलाई योगबलको पूर्ण ज्ञान प्राप्ति हुन्छ । आफ्नो शरीरका सबै प्रकारका नाडीहरूलाई नियन्त्रित गर्ने क्षमता प्राप्त हुन्छ र अध्यात्म पथमा अग्रसर हुन मद्दत पुग्दछ जसबाट व्यक्तिले एउटै आसनमा घण्टौँ बस्न सक्छ, श्वासलाई पूर्ण नियन्त्रण गर्न सक्छ, कैयौँ दिनसम्म बिना भोजन, बिना वायु रहन सक्छ । एक प्रकारले उसलाई आफ्नो शारीरिक शक्तिहरूमाथि नियन्त्रण गर्ने शक्ति प्राप्त हुन्छ ।

**'णं'** – आकाश मार्गबाट कहीँ पनि आउने र जाने क्षमता यस दलको जागरणबाट प्राप्त हुन्छ ।

**'तं'** – यस चौथो दलको जागरण भएपछि साधकमा जलमाथि त्यसरी नै हिँड्ने क्षमता प्राप्त हुन्छ जसरी ऊ भूमिमाथि हिँड्ने गर्दछ ।

**'थं'** – यस दलबाट प्राप्त हुने उपलब्धी हो– स्वयंलाई अदृश्य बनाउने शक्ति ।

**'दं'** – पृथ्वीको सतहमा अत्यन्त तीव्र गति अर्थात् वायुवेगबाट चल्ने क्षमता यस दलको जागरण भएपछि प्राप्त हुन्छ ।

नाभिस्थल नै त्यो स्थल हो जसको माध्यमबाट गर्भस्थ शिशुमा माताबाट भोजन र वायु अर्थात् जीवनीशक्ति प्राप्त हुन्छ ।

**'धं'** – यस दलको जागरण भएमा व्यक्तिमा पशुपंक्षी, बोटबिरुवा, जडिबुटी आदिसँग वार्तालाप गर्ने क्षमता तथा तिनीहरूको भाषा बुझ्ने ज्ञान प्राप्त हुन्छ ।

**'नं'** – यस दलको जागरणबाट व्यक्तिमा प्रकृतिमाथि नियन्त्रण गर्ने क्षमता प्राप्त हुन्छ । ऊ ऋतुहरूको प्रभावबाट मुक्त हुन्छ तथा उसमा कुनै पनि प्रकारका प्राकृतिक विपत्तिहरूलाई नियन्त्रण गर्ने क्षमता विकास हुन्छ । ऊ आफ्नो सुविधाअनुसार प्रकृतिलाई आफ्नो इच्छाअनुरूप ढाल्न सक्षम हुन्छ ।

**'पं'** – यस दलको जागरण भएपछि नेतृत्वको क्षमता प्राप्त हुन्छ र षोडश गुणहरूको उपलब्धि हुने हुनाले उसको विचार मानव कल्याणका लागि नै हुने गर्दछ तथा एउटा सक्षम मार्गदर्शक सिद्ध हुन्छ । यसै दलको जागरणका कारण 'विवेकानन्द' विश्वविख्यात भएका हुन् ।

**'फं'** – यस दलको जागरणपश्चात् 'ध्यान'को सर्वोच्च उपलब्धि हुन्छ । यसको कारण नै ध्यानको क्रियाबाट दिव्यानन्दको अनुभूति हुन्छ र ऊ प्रत्येक प्रकारको आध्यात्मिक उन्नतिका लागि तयार हुन्छ ।

मणिपुर चक्रको जागरणबाट ध्यानका साथसाथ आयुर्वेदको पनि समग्ररूपबाट व्यक्तिलाई ज्ञान प्राप्त हुन्छ तथा प्रकृतिप्रदत्त सबै उपहारहरूको समुचित लाभ उठाउनमा ऊ सक्षम हुन्छ । क्रमश:

जय गुरुदेव !

# आलु

संसारका जुनसुकै स्थानमा पनि उब्जिन सक्ने प्राकृतिक वरदानको रूपमा प्रचलित आलुलाई तरकारीको रूपमा त सबैले प्रयोग गरेकै छन् । तापनि विभिन्न शारीरिक रोगहरूमा समेत यसले उपचार गर्न सक्ने तथ्यमाथि झट्टै विश्वास गर्न गाह्रै पर्छ, तर यो सत्य हो । कार्बोहाईड्रेट, प्रोटिन, फस्फोरस, फलामका साथै क्याल्सियमजस्ता तत्त्वहरू बोकेको यस आलुको प्रयोगबाट रक्तवाहिनी धमनी दीर्घकालसम्म लचिलो भइरहन्छ र कडा हुन पाउँदैन । यसैले आलु खाएर दीर्घायु प्राप्त गर्न सकिन्छ । तातो खरानीको भुङ्ग्रोमा वा मन्द आँचमा पोलेको आलुको प्रयोग गर्नु सर्वोत्तम हुन्छ ।

केही रोग विशेषका लागि आलुको प्रयोगका बारेमा तल केही जानकारी दिने कोशिष गरिएको छ–

(१) गठियावात (जोर्नीको दु:खाइ) : तातो खरानीको भुङ्ग्रोमा चार-पाँचवटा आलु पोलेर बोक्रा छोडाएर नुन-खुर्सानीसँग सधैँ खाने गरेमा जोर्नीको दु:खाइ निको हुन्छ ।

(२) सुन्निने वा जोर्नी पीडा : घुँडा सुन्निने वा जोर्नीका कुनै पनि रोगमा काँचो आलु पिसेर लगाएमा निकै फाइदा हुन्छ ।

(३) मृगौलाको पत्थरी : मृगौलामा पत्थरी भएको रोगीलाई आलुको सेवन गराइरहेमा निकै आराम हुन्छ । रोगीलाई बारम्बार आलु खुवाइरहनुका साथै पटक-पटक धेरै मात्रामा पानी पिलाइरहने गरेमा पत्थरी एवं यसका स-साना कणहरू मूत्रमार्गबाट बाहिर निस्किन्छन् ।

(४) आँखामा जालो लाग्नु वा फूलो पर्नु : काँचो आलुलाई ढुङ्गामा अथवा सिलौटामा घोटेर गाजलझैँ गरी लगाउने गरेमा जालो र फूलो हटेर जान्छ ।

(५) अम्लपित्त : पाचन क्रिया नराम्रो भएको, अमिलो डकार आइरहने व्यक्तिले तातो खरानीको भुङ्ग्रो वा बालुवामा पोलेको आलुमा नुन र मरिच दलेर खाएमा कब्जियतका साथै आन्द्राको विकार, दुर्गन्ध हट्छ । आलुमा विद्यमान पोटासियम लवण तत्त्वले अम्लपित्तलाई रोक्छ । पोलेको आलु गहुँको रोटीभन्दा चाँडै पच्दछ ।

जय गुरुदेव !

## वार्षिकोत्सव सम्पन्न

गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमले गत वैशाख ५ गतेका दिन आफ्नो छैटौँ वार्षिकोत्सव कार्यक्रम भव्य रुपमा सम्पन्न गऱ्यो । सिद्धाश्रम शक्ति केन्द्रको व्यवस्थापनमा सञ्चालित यस स्कुलको वार्षिकोत्सव कार्यक्रममा विद्यार्थी, अभिभावकका अलावा अतिथिहरु सावरपन्थी, सावर मातृका, जिल्ला शिक्षा कार्यालयका वि.नि. ज्यूहरुको पनि उपस्थिति रहेको थियो । कार्यक्रम सञ्चालन विद्यार्थीहरुले नै गरेका थिए । बिहान ११ बजे प्रार्थनाबाट शुभारम्भ भएको उक्त कार्यक्रममा नृत्य, गायन, पुरस्कार वितरण, मन्तव्य आदि क्रमहरु रहेका थिए ।

विभिन्न कक्षाका छात्र-छात्राहरुले आफ्नो मनमोहक नृत्य र गायन कला पस्कँदा अभिभावकज्यूहरु मन्त्रमुग्ध देखिनुहुन्थ्यो । अभिभावहरुको बाक्लो उपस्थित रहेको उक्त कार्यक्रममा वर्षभरिमा अध्ययन र अतिरिक्त क्रियाकलापतर्फ विभिन्न विद्यामा उत्कृष्ट विद्यार्थीहरुलाई पुरस्कार तथा पदक समेत प्रदान गरिएको थियो ।

मन्तव्यको क्रममा विद्यालय इन्चार्ज र सहायक प्रधानाध्यापकज्यूले विद्यालयको चौतर्फी विकास गर्ने हेतुले विद्यालयमा हाल अनुभवी, विषय विशेषज्ञ र दक्ष तालिम प्राप्त शिक्षक, शिक्षिकाहरुको समूह कार्यरत रहेको र २०६७ सालमा विद्यालयले पहिलो पटक एस. एल. सी. परिक्षामा विद्यार्थीहरुलाई उपस्थित गराउने कुरा सगौरव बताउनुभएका थियो । मन्तव्यकै क्रममा अतिथिका रुपमा उपस्थित सावरपन्थी सदस्य रामजी अर्यालले विद्यालयलाई सुधार गर्दै भौतिक तथा आध्यात्मिक ज्ञानले सुसज्जित दक्ष नागरिक उत्पादन गर्ने लक्ष्य रहेको कुरा बताउनुभएको थियो । जय गुरुदेव !

◀ सद्गुरुदेव अवतरण महोत्सवका झलकहरु

वार्षिकोत्सव कार्यक्रमका झलकहरु ▶

## हवन कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रका मासिक हवन कार्यक्रम अन्तर्गत हरेक महिनाक सञ्चालन हुँदै आइरहेका हवन कार्यक्रमहरू गत वैशाख महिनामा निम्नानुसार सम्पन्न भए–

**केन्द्रीयरुपमा सम्पन्न**

वैशाख १ गते वुधबार– तान्त्रोक्त महालक्ष्मी हवन, महालक्ष्मी मन्दिर, लगनखेल, समय विहान ८:००-९:०० । वैशाख २ गते बिहीबार– तान्त्रोक्त वगलामुखी हवन, वगलामुखी मन्दिर, पाटन, समय विहान ८:००-९:०० । वैशाख ६ गते सोमबार– श्री शिव गोरक्ष हवन, गोरखनाथ मन्दिर, पशुपति, मृगस्थली, समय विहान ८:००-९:०० । वैशाख ७ गते मंगलबार– तान्त्रोक्त वटुक भैरव हवन, वटुक भैरव मन्दिर, लगनखेल, समय विहान ७:००-८:०० ।

**सम्पर्क कार्यालयहरुबाट सम्पन्न**

वैशाख १ गते वुधबार– तान्त्रोक्त विन्ध्यवासिनी हवन, विन्ध्यवासिनी मन्दिर, पोखरा, कास्की, समय विहान ८:००-९:०० । वैशाख २ गते बिहीबार– तान्त्रोक्त तान्त्रोक्त महर्षि वेदव्यास हवन, वेदव्यास गुफा, तनहुँ, समय विहान ८:००-९:०० । वैशाख ७ गते मंगलबार– तान्त्रोक्त गणपति हवन, सूर्यविनायक, भक्तपुर, समय विहान ७:००-८:०० । वैशाख ७ गते मंगलबार– तान्त्रोक्त चण्डेश्वरी हवन, चण्डेश्वरी मन्दिर, काभ्रे, समय विहान ७:००-८:०० ।

## २०६७ ज्येष्ठ महिनामा पर्ने चाडपर्वहरु

**रोट महोत्सव– ज्येष्ठ १३ देखि २३ गते सम्म**

| मिति | चाडपर्व |
|---|---|
| ज्येष्ठ २ गते | अक्षय तृतीया |
| ज्येष्ठ ३ गते | **श्री शिव गोरक्ष हवन** |
| ज्येष्ठ ४ गते | **तान्त्रोक्त वटुक भैरव हवन, तान्त्रोक्त गणपति हवन** |
| ज्येष्ठ ५ गते | **तान्त्रोक्त महालक्ष्मी हवन तान्त्रोक्त विन्ध्यवासिनी हवन** |
| ज्येष्ठ ६ गते | **तान्त्रोक्त बगलामुखी हवन, तान्त्रोक्त महर्षि वेदव्यास हवन** |
| ज्येष्ठ ७ गते | **दिव्य गुरु महोत्सव,** अष्टमीव्रत, गोरखकाली पूजा |
| ज्येष्ठ १० गते | मोहिनी एकादशी |
| ज्येष्ठ ११ गते | प्रदोष व्रत |
| ज्येष्ठ १३ गते | गोरक्ष प्रकट दिवस, बुद्ध जयन्ती गोरखामा रोट महोत्सव शुभारम्भ |
| ज्येष्ठ २२ गते | गोरखकाली पूजा |
| ज्येष्ठ २५ गते | अपरा एकादशी |
| ज्येष्ठ २६ गते | प्रदोष व्रत |
| ज्येष्ठ २९ गते | वटसावित्री व्रत |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे-गुरू पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे-आरती**

## आध्यात्मिक सह नेतृत्वकर्ताहरूका लागि तालिम

सिद्धाश्रम शक्ति केन्द्रले गत वैशाख २० र २१ गते आध्यात्मिक सह-नेतृत्वकर्ताहरूको तालिम तथा प्रशिक्षण कार्यक्रम सम्पन्न गऱ्यो । बिहान १० बजे स्तुति प्रार्थनाबाट शुभारम्भ भएको उक्त तालिम तथा प्रशिक्षण कार्यक्रममा सद्गुरुदेवहरुको स्तुति, स्तवन, स्त्रोत्र पाठ, पूजनादि क्रमपछि विविध संस्थागत विषयमा प्रशिक्षण प्रदान गरिएको थियो । विपरीत परिस्थितिमा टाढाटाढाबाट हिँड्दै गुरु सेवामा रत रहने कार्यकर्ता साधक साधिकाहरु उक्त तालिम कार्यक्रमको लागि आउनुभएको थियो भने बाहिरी जिल्लामा कार्यरत थुप्रै गुरुसेवी कार्यकर्ताहरु भने तालिममा उपस्थित हुन सक्नुभएको थिएन । तथापि उत्साहजनक सहभागिता रहेको उक्त कार्यक्रमको अन्त्यतिर सुनाइएको ग्रेडिङ अनुसार २४ जनाले आध्यात्मिक नेतृत्व तहमा प्रवेश पाउनु भएको थियो । दुवैदिनको कार्यक्रममा साँझ ५:०० बजे गुरु आरती पनि सम्पन्न भएका थिए ।

## विविध कार्यक्रमहरू

**नयाँबजार (काठमाडौं)**: गत वैशाख १६ गते नयाँबजारस्थित आरती सञ्चालन केन्द्रले आफ्नो तेस्रो वार्षिकोत्सव भजन, कीर्तन, नृत्य गरेर मनायो । अपराह्न १२ बजेशुभारम्भ भएको उक्त कार्यक्रममा दैनिक गुरु आरती पछि आश्रममा दीपावली पनि गरिएको थियो ।

**मच्छेगाउँ (काठमाडौं)**: आरती संचालन केन्द्र मच्छेगाउँले गत २५ गते पुरुषोत्तम महिनाको पावन अवसर पारेरभजनकीर्तन कार्यक्रम आयोजना गऱ्यो । बिहान ९ बजेदेखि शुभारम्भ भएको कार्यक्रममा तीनथाना, बाघभैरव आरती संचालन केन्द्रहरुलगायतको पनि सहभागिता रहेको थियो ।

# यस्तो रह्यो

# ७७ औं सद्‌गुरुदेव अवतरण दिवस

यस दिनको जतिसुकै महिमा गाए पनि कम हुन्छ । यस दिनको कारणले नै भौतिकतामा डुबिरहेका मानिस आज पुनः अध्यात्मतर्फ उन्मुख भइरहेका छन्, मन्त्र, तन्त्र, ध्यान, योग, आयुर्वेदप्रति मानिसहरुको आकर्षण बढिरहेको छ, लुप्तप्रायः स्थितिमा पुगेका विधाहरुको देश विदेशमा अनुसन्धान भइरहेको छ, मानिसमा आफू शरीर मात्र होइन अजर, अमर, निर्मलस्वरुप परमात्माको अंशस्वरुप आत्मा हो भन्ने चेतना अंकुरित भइरहेको छ । यसै दिनको कारण नै लाखौं करोडौं धर्तीबासीहरुलाई ब्रह्माण्डनायक सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई डा. नारायणदत्त श्रीमालीको स्वरुपमा प्राप्त गरी उहाँलाई गुरुरुपमा मान्ने सौभाग्य प्राप्त गरेका छन् । युगपुरुषको अवतरण दिवसको रुपमा आफूलाई इतिहासमा चिनाउने सौभाग्य प्राप्त गरेको छ यसै दिनले अर्थात् १९३३ अप्रिल २१ तारीखले ।

एउटा सामान्य मानिसको जन्मदिन त उसका लागि, परिवारका लागि कति महत्त्वको हुने गर्दछ भने युगपुरुषको, लाखौं शिष्यहरुको प्राणाधारको जन्मदिनको महत्त्वको त के कुरा र ! सायद यही भएर नै होला प्रकृति स्वयंले पनि यस महोत्सवको समयमा वातावरणलाई नवीन बनाउँछिन्, वसन्तको आगमन हुन्छ, नयाँ नयाँ पालुवाहरु पलाउँछन्, ढकमक्क फूलहरु फुल्दछन् मानौं प्रकृति नै सम्पूर्णरुपबाट समर्पित हुँदै यस दिवसलाई मनाउनका लागि लालायित भएकी हुन् ।

यस दिनको महत्त्व यस रुपमा पनि छ कि यस दिनले गुरुवर निखिलेश्वरानन्दलाई दिएको छ,

उहाँलाई प्राप्त गरेर नै उहाँकै आदेश निर्देशन बमोजिम महायोगी श्री गुरु गोरखनाथलाई चिन्न, बुझ्न, गुरुरुपमा धारण गर्ने सौभाग्य पनि हामीले प्राप्त गरेका छौँ । दुई महायोगीहरुलाई गुरुरुपमा धारण गर्दै, उहाँहरुको कृपा, आशीर्वादको फलस्वरुप सिद्धाश्रम शक्ति केन्द्रको जन्म पनि यसै दिनमा भएको थियो, १९९९ अप्रिल २१ तारीखको दिनमा भएको थियो । गुरु जन्म दिवस वास्तवमा शिष्यहरुको जन्म दिवस हो भन्ने सद्गुरुदेवको भनाइले पनि यस दिनको महत्व दर्शाउँछ ।

युगपुरुषको अवतरण भएको पनि ७७ वर्ष बितिसकेछ । गत अप्रिल २१ तारीखका दिन अर्थात् २०६७ वैशाख ८ गते सिद्धाश्रम शक्ति केन्द्रले ७७ औँ सद्गुरुदेव अवतरण दिवस र संस्थाको ११ औँ वार्षिकोत्सव विभिन्न कार्यक्रमहरु आयोजना गरी भव्य एवं दिव्यरुपमा मनायो ।

यस पटकको सद्गुरुदेव अवतरण दिवसमा बिहान ८:00 बजे हनुमान ढोकास्थित काष्ठमण्डपमा रहेको श्री गुरु गोरखनाथको मन्दिरबाट सद्गुरुदेवहरुको रथयात्रा निकालिएको थियो । रथयात्राको अग्रपंक्तिमा कलश र संस्थाको झण्डा बोकेका सयौँ साधक साधिकाहरु थिए । बीचमा सद्गुरुदेवहरुको उभिएको स्वरुपको तस्वीर, गुरु आसन, पादुका राखिएको सुसज्जित गाडी थियो । त्यसपछि विभिन्न देवीदेवताका भेषमा सजिएर आएका विद्याश्रमका भाइबहिनीहरु, अष्टमातृकास्वरुपमा सजिएका भक्तपुर सम्पर्क कार्यलयका साधकसाधिकाहरुलगायत थिए भने सो पश्चात् पंक्तिवद्ध भएका हजारौँ साधकसाधिकाहरु थिए । धेरैजसोले सिद्धाश्रम शक्ति केन्द्रको झण्डा, गुरुवाणीहरु तथा नाराहरु लेखिएका प्ले कार्ड, सम्पर्क कार्यालयहरुले आ-आफ्ना ब्यानर, विद्याश्रमका भाइबहिनीहरुले आश्रम, विद्याश्रम तथा नेपालको राष्ट्रिय झण्डा आदि बोकेका

थिए । पूर्ण अनुशासित, सांस्कृतिक झाँकी प्रदर्शन गर्दै, सद्‌गुरुदेवहरुको जयकार गर्दै, नाचगान गर्दै हजारौँ भक्तजनहरु सहभागी भएको र्‍याली अत्यन्तै आकर्षक र भव्य देखिन्थ्यो । र्‍याली नयाँसडक हुँदै महांकाल मन्दिरलाई दाहिने पारी जमलको बाटो हुँदै कार्यक्रमस्थल कमलपोखरीको अग्रवाल भवनमा पुगेको थियो ।

अग्रवाल भवनको कार्यक्रम हल सुसज्जित बनाइएको थियो । सबैभन्दा अगाडि स्टेजमा सद्‌गुरुदेवहरुको भव्य एवं दिव्य तस्वीरहरु राखिएका थिए, सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूको गृहस्थस्वरुपको तस्वीर पनि राखिएको थियो । गुरु तस्वीरको बीचमा आकर्षक गुरु आसन राखिएको थियो । आसनको अगाडि गुरु पादुका राखिएको थियो भने दुवैतर्फ सद्‌गुरुदेवहरुको प्रतीकको रुपमा एक-एकवटा दीयो बालिएको थियो । आसन पछाडि भित्तामा माथिपट्टि ठूलठूला अक्षरमा ७७ औँ सद्‌गुरुदेव अवतरण दिवस लेखिएको थियो भने त्यसलाई बिजुली बत्तीबाट झिलिमिली सजाइएको थियो । साथै गुरुमन्त्रहरु पनि सोही रुपमा राखिएका थिए । स्टेज तथा हल फूल, माला, बोट बिरुवा आदिबाट सजाइएको थियो ।

अग्रवाल भवनमा भएको कार्यक्रम बिहानः ९:00 बजे प्रार्थनापश्चात् निखिल स्तवन र गोरक्ष स्तवनबाट शुभारम्भ भएको थियो । त्यसपछि गुरु पूजनको क्रम चलेको थियो । त्यसदिनको पूजनमा अगाडि बसेर सद्‌गुरुदेवहरुको पादुका पूजन गर्ने सौभाग्य मीनबहादुर थापा, मीना थापा, सनिता थापा, मधुमती रन्जित, तारा गौतम, सुलोचना बानियाँ, रोजिना महर्जन, जे.बी. सुनुवार तथा सावित्री खड्काले प्राप्त गर्नुभएको थियो । पूजनपछि गुरुमन्त्र जपको क्रम रह्यो । मंत्र जपपछि हलबाहिर हवनको क्रम चल्यो । हलभित्रकाहरु भजन र संगीतमा रम्नुभयो । हवनपश्चात् लक्षदीप अर्पणको क्रम रहेको थियो ।

थुप्रै साधक साधिकाहरुले गुरुचरणमा लाखबत्ती समर्पित गर्नुभएको थियो । त्यसपछि आरतीको क्रम सम्पन्न भयो । कार्यक्रमअवधिभर नै भजनकीर्तन, नृत्य प्रस्तुत भएका थिए । विभिन्न सम्पर्क कार्यालयहरुको तयारीमा विविध मनमोहक नृत्यहरु प्रस्तुत भएका थिए, कर्णप्रिय भजनहरु प्रस्तुत भएका थिए ।

संस्थागत प्रतिवेदन सावर मातृका सदस्य साधिका विन्देश्वरी घरालले सुनाउनुभएको थियो उक्त कार्यक्रममा विशेषरुपमा तयारी गरिएको केक सद्‌गुरुदेवलाई अर्पण गर्दै ह्यापी वर्थ डे टु यु भन्ने जन्मदिनको शुभकामना गीत सबैले मिलेर गाउनुभएको थियो भने सो केक कार्यक्रमपश्चात् उपस्थित भक्तजनहरुलाई गुरुप्रसादको रुपमा वितरण गरिएको थियो । ह्यापी वर्थ डे बोलको भजनलाई लोक तथा विभिन्न भाकाहरुमा प्रस्तुत गरी नाच्ने गाउने क्रम धेरै समय रह्यो ।

संस्थाको एघारौँ वार्षिकोत्सवको प्रतीकस्वरुप ११ वटा पानसमा राखिएको दीयो सावर पन्थी साधक रामजी अर्यालले बाल्नुभएको थियो भने प्रवचन एवं स्ववचनको क्रममा सो दिनको महिमा बताउँदै विविध कुराहरुको बारेमा जानकारी गराउनुभएको थियो ।

उक्त कार्यक्रममा विभिन्न योगी, नाथ योगी, सन्तहरुको पनि उपस्थिति थियो ।

उपत्यका बाहिरका सबै सम्पर्क कार्यालयहरुमा पनि त्यस दिन विशेष कार्यक्रमहरु सञ्चालन भएका थिए भने भारत, अष्ट्रेलिया, अमेरिका आदि देशहरुमा पनि विशेषरुपमा कार्यक्रम सम्पन्न भएका थिए । आश्रमका प्रत्येक इकाईहरुमा साँझ दीपावलीको साथमा भजनकीर्तन सञ्चालन भएको थियो ।

उक्त अवतरण दिवस भव्य, दिव्य, सफलतापूर्वक सम्पन्न हुँदै आश्रमको इतिहासमा अविस्मरणीय दिनको रुपमा रहन पुगेको महसुस सबैले गरेका छन् । जय गुरुदेव ।

समय परिवर्तनशील छ। हालको समय, परिस्थिति संकटग्रस्त छ। चारैतर्फ अन्यौल र संत्रास छ। एकातर्फ राजनैतिक, सामाजिक समस्या र संकट अघि बढिरहेको छ भने अर्कोतर्फ आध्यात्मिक जागरणको अभियान पनि अघि बढिरहेको छ। नेपालमा र विश्वमा नै धेरै रुपबाट आध्यात्मिक अभियान अघि बढिरहको सन्दर्भमा सिद्धाश्रम शक्ति केन्द्रको आध्यात्मिक युग पुनर्स्थापनाको अभियान सशक्तताका साथ अघि बढिरहेको छ।

विभिन्न किसिमका आध्यात्मिक गतिविधिहरुबाट समाजमा आध्यात्मिक चेतना ल्याउने क्रममा हालसालै सि.श.के.ले परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीको ७७ औं अवतरण दिवस तथा संस्थाको ११ औं वार्षिकोत्सव भव्यताका साथ सम्पन्न गरेको छ। हाल संस्था गोरक्ष प्रकट दिवस तथा सातौं रोट महोत्सवको तयारीमा जुटेको छ।

सम्पूर्ण गुरुहरुमा महागुरु, सम्पूर्ण नाथहरुमा महानाथ गुरु गोरक्षको महिमा आफैमा अवर्णनीय, अतुलनीय छ। यस्ता दिव्यतम व्यक्तित्वको महिमा जनजनलाई बुझाउनु र उहाँको कृपा, आशीर्वादको भागीदार सबैलाई बनाउनु आजको समयका माग हो। यही कुरालाई हृदयंगम गरी सि.श.के. अघि बढिरहेको सन्दर्भमा रोट महोत्सवको आयोजना एउटा महत्वपूर्ण आयाम बनेको छ। एघार दिनसम्म सम्पन्न हुने यो महोत्सव एउटा राष्ट्रिय महोत्सव बनिसकेको छ जसमा सहभागी हुन हजारौंहजार मानिसहरु नेपालभरबाट आउने गर्दछन्।

रोट महोत्सव एउटा दिव्यतम आध्यात्मिक महोत्सव हो जुन सही अर्थमा शिष्य महोत्सव हो, शिष्यहरुको महापर्व हो। महोत्सवको अवधिभर त्यसमा सहभागी हुने व्यक्तिहरुमा छाउने खुशी, सन्तुष्टि र आनन्दले यो कुरा सधैं प्रमाणित गरेको छ कि यो पर्व वास्तवमा नै गुरु शिष्य मिलनको महापर्व हो र यही गुरु शिष्य मिलन नै सबैतिर खुशी र आनन्द बनेर छचल्किने गर्दछ। यही आनन्दको वर्षातले नै महोत्सवको समयमा आउने जाने व्यक्तिहरु र त्यहाँ खटिरहेका गुरुसेवक सेविकाहरु यति प्रसन्न र सन्तुष्ट देखिन्छन् कि गर्मीको चर्को घाममा उकालो ओरालो गर्नलाई अथवा वर्षा भइरहेको बेलामा गुरुकार्य गर्न उनीहरुमा प्रसन्नताको कुनै कमी देखिँदैन।

रोट महोत्सव सन्निकट छ। यो महोत्सव विशेष यसकारण पनि छ कि यो सातौं महोत्सव हो। तसर्थ आगामी गोरक्ष प्रकट दिवस र सातौं रोट महोत्सवमा सहभागी बन्नु र यसलाई सफल बनाउनु हामी सबैको दायित्व हो।

अस्तु!

१-४: वैशाख महिनामा सञ्चालित विभिन्न मासिक हवन कार्यक्रमहरु। ५-९: आध्यात्मिक सह-नेतृत्वकर्ताहरुका लागि तालिम तथा प्रशिक्षण। १०: आरती सञ्चालन केन्द्र नयाँबजारको वार्षिकोत्सव (वैशाख १६) ११: तीनथाना आरती सञ्चालन केन्द्रको वार्षिकोत्सव (चैत्र १४) १२: आरती सञ्चालन केन्द्र बबरमहलको वार्षिकोत्सव (चैत्र २४) १३: भक्तपुरमा सम्पन्न भजनकीर्तन तथा कार्यकर्ता प्रशिक्षण (चैत्र ७) १४: सिन्धुपाल्चोकको सुकुटेमा सम्पन्न भजन कीर्तन तथा नि:शुल्क स्वास्थ्य शिविर (चैत्र २८) १५: सिन्धुपाल्चोकको बाह्रबिसे सम्पर्क कार्यालयमा सम्पन्न कार्यकर्ता प्रशिक्षण (चैत्र २९) ।

गो. हु. का. द. नं. ९/०६०/६१
का. जि. द. नं. ७०/०५६

।। ॐ नमो गुरु मछिन्द्र, शब्द साँचा
पिण्ड काचा मेरा भक्ति, गुरुका शक्ति
नवनाथै जगाऊँ, चौरासीनाथै जगाऊँ
फूरो मंत्र ईश्वरो गुरु गोरख वाचा ।।

मुद्रामृत ध्यान

दुर्लभ ग्रन्थहरूको अध्ययन गरौं ।
मानव जीवनलाई धन्य बनाऔं ।।